।। ॐ श्रीलक्ष्मीनारायणाभ्यां नमः ।।

**शेषशायी पद्मनाम शान्ताकार रमापति ।**
**जगदाधार श्रीविष्णु दिउन् मोक्षत्वको गति ।।**

***

# श्रीविष्णुसहस्रनामस्तोत्रम्

**यस्य स्मरणमात्रेण जन्मसंसारबन्धनात् ।**
**विमुच्यते नमस्तस्मै विष्णवे प्रभविष्णवे ।।१।।**

जसको स्मरणगर्नाले मात्र पनि संसारको जन्ममरणादि बन्धन (काम क्रोध लोभ मोह मद मात्सर्यादि विकार) बाटमुक्ति पाइन्छ, त्यस्ता सर्वगुणसम्पन्न सर्वसामर्थ्यवान् श्रीविष्णु भगवान्लाई हृदयभित्रैदेखि नमस्कार छ ।।१।।

**नमः समस्तभूतानामादिभूताय भूभृते ।**
**अनेकरूपरूपाय विष्णवे प्रभविष्णवे ।।२।।**

समस्त चराचर प्राणीका (उद्भिदज जरायुज श्वेदज अण्डज आदिका) मूल र आदिकारण भएका सागर वन पर्वत नदी भूभाग युक्त पृथ्वीलाई धारण गर्ने (पृथ्वी त्वया धृता लोका देवी त्वं विष्णुना धृता) मत्स्य कूर्म वराह हयग्रीव आदि अनेक र अलौकिक रूप धारण गरी लोकरक्षार्थ अवतार लिने त्रिदेवमध्येका श्रेष्ठ (भृगुपद-प्रहारलाई हृदयमा श्रीवत्स रूपमा धारण गरेका) प्रभु श्रीविष्णुलाई सतत् हार्दिक नमस्कार छ ।।२।।

वैशम्पायन उवाच

**श्रुत्वा धर्मानशेषेण पावनानि च सर्वशः।**
**युधिष्ठिरः शान्तनवं पुनरेवाभ्यभाषत ॥३॥**

वैशम्पायन मुनि भन्दछन्– महाभारतको युद्धमा अर्जुनको बाणहरूलागी शरशैय्यामा शयन गरीरहेका भीष्मपितामहबाट राजधर्म र मोक्ष्यधर्मका अत्युत्तम उपायका कुराहरू सुनीसकेपछी महाराज युधिष्ठिर शन्तनुका पुत्र भीष्मपितामहसंग पुनः प्रश्न गर्न लाग्नुभयो ॥३॥

युधिष्ठिर उवाच

**किमेकं दैवतं लोके किं वाप्येकं परायणम्।**
**स्तुवन्तः कं कमर्चन्तः प्राप्नुयुर्मानवाः शुभम् ॥४॥**

महाराज युधिष्ठिर प्रश्नगर्नुहुन्छ– हे पितामह ! तीनै लोकमा पूज्य र श्रेष्ठ देवता को छन् ? सबभन्दा उत्तम पुण्य र धर्म कुन हो ? कसको गुणगान भजन कीर्तन नाम संस्मरण गर्नाले र पूजा अर्चना गर्नाले मनुष्यहरू उत्तमगतिमा (शाश्वती मुक्तिमा) पुग्दछन् ॥ जुन मनुष्य योनिको मुख्य सार हो ॥४॥

**को धर्मः सर्वधर्माणां भवतः परमो मतः।**
**किं जपन्मुच्यते जन्तुर्जन्मसंसारबन्धनात् ॥५॥**

हे देवव्रत ! पितामह ! हजुरले सर्वश्रेष्ठ र उत्तम मानिएको धर्म कुन हो ? कसको कुन र कसरी जप (संस्मरण र ध्यान) गर्नाले चौराशीलाख योनीको चक्कर काटी वल्लतल्ल मनुष्य योनि प्राप्त गरेको मनुष्यरूपी प्राणी सांसारिक बन्धनबाट (पुनरपिजननं पुनरपिमरणं पुनरपि जननीजठरे शयनम् बाट) मुक्त हुन्छ ? सो आज्ञाहवस् ॥५॥

भीष्म उवाच

**जगत्प्रभुं देवदेवमनन्तं पुरुषोत्तमम् ।**
**स्तुवन्नामसहस्रेण पुरुषः सततोत्थितः ।।६।।**

भीष्मपितामह युधिष्ठिरलाई बोध गराउँदे भन्नुहुन्छ- हे धर्मभीरू युधिष्ठिर! जगतका (भूर्लोक भुवर्लोक र स्वर्ग लोकका) ईश्वर, देवताका (इन्द्र चन्द्र सूर्ययम वरूण कुबेर आदिका) पनि देवता जसको आदि र अन्त्य नै छैन जो अनश्वर छन् त्यस्ता भगवान पुरुषोत्तमको सहस्र नामले मनुष्य बारम्बार स्तुति गरी आफ्नो (मानव जीवनको) मूल तत्त्वलाई सार्थक पार्दछ ।।६।।

**तमेव चार्चयन्नित्यं भक्त्या पुरुषमव्ययम् ।**
**ध्यायन्स्तुवन्नमस्यंश्च यजमानस्तमेव च ।।७।।**

उनै अनश्वर र अविनाशी परमेश्वर पुरुषोत्तमको भक्तिपूर्वक पूजा ध्यान स्तुति नमस्कार यज्ञयागादि नित्य गरी मनुष्य आफूलाई कृतकृत्य ठान्दछ ।।७।।

**अनादिनिधनं विष्णुं सर्वलोकमहेश्वरम् ।**
**लोकाध्यक्षं स्तुवन्नित्यं सर्वदुःखातिगो भवेत् ।।८।।**

आदि र अन्त्य न भएका अनश्वर (कहिल्यै नाश न हुने प्रलय हुँदा पनि शेष रहने) सम्पूर्ण लोकका महेश्वर तीनै लोक (भूर्भुवःस्व) का स्वामी प्रभु नारायण श्रीविष्णुको नित्य स्तुतिगर्नाले मनुष्य सम्पूर्ण दुःख (कायिक वाचिक मानसिक सांसर्गिक) बाट मुक्त भै त्रिताप रहित (आधि व्याधि उपाधि) भै सदा प्रसन्न रहन्छ ।।८।।

**ब्रह्मण्यं सर्वधर्मज्ञं लोकानां कीर्तिबर्धनम्।**
**लोकनाथं महद्भूतं सर्वभूतभवोद्भवम्।।९।।**

ब्रह्म र धर्म का ज्ञाता (सृष्टि स्थिति र लय यी प्राकृतिक प्रकृया हुन्। यिनकै अनुसरण गरी समय समयमा स्वकर्ममा संलग्न भैरहनु र उपलब्धि प्राप्त गर्नु नै धर्म हो त्यसबाट प्राप्त हुने तत्त्व नै ब्रह्मज्ञान हो) ईश्वर पनि समय सापेक्ष्य भै स्वकर्ममा संलग्न रहन्छन्। यही प्रकृया अन्तर्गत रही लोकको कीर्ति बृद्धिगर्ने, तीनै लोक (भूर्भुवः स्वः) का नाथ सर्वेश्वर उनै प्रभु श्रीविष्णु सम्पूर्ण प्राणीमात्रको उत्पत्तिका कारण हुनुहुन्छ, उत्पत्तिका निमित्त नारायणद्वारा निर्देशित भएपछि मात्र ब्रह्माजी प्राणीको सृष्टि गर्नुहुन्छ) ।।९।।

**एष मे सर्वधर्माणां धर्मोऽधिकतमो मतः।**
**यद्भक्त्या पुण्डरीकाक्ष्यं स्तवैरर्चेन्नरः सदा।।१०।।**

हे युधिष्ठिर! सवै धर्महरूमा उत्तम धर्मनै श्रीनारायणस्तुति हो, यसमा मेरो पनि पूर्ण सम्मत्ति छ। हरिकीर्तन ईश्वरमा सायुज्य हुने साधना सोपान हो, तसर्थ मनुष्यले सदा सर्वदा सर्वथा सायं प्रातः भगवान् पुण्डरीकाक्ष प्रभुको भक्तिभावयुक्त भै पूजा अर्चना स्तुति र संस्मरणं गनुपर्दछ। (सर्वं त्यक्त्वा हरिं भजेत्) यो कहिल्यै पनि न बिर्सनु ।।१०।।

**परमं यो महत्तेजः परमं यो महत्तपः।**
**परमं यो महद्ब्रह्म परमं यः परायणम्।।११।।**

जुन ईश्वर परमतेजस्वीछन्, (जस्को दिव्य आलोक हेर्न सकिन्न) गीतामा अर्जुनले भनेका थिए "भयेन च प्रव्यथितं मनो मे" जुन प्रभु

परम तपस्वी छन् (सदा सर्वदा ध्यानमग्न भै लोक कल्याणको लागि चिन्तन गरीरहन्छन्) जो परब्रह्म परमेश्वर त्रिगुणातीत छन् जो ध्येय स्तुत्य र समर्चनीय छन त्यस्ता श्री विष्णु भगवानमा मन लागिरहोस् ।।११।।

**पवित्राणां पवित्रं यो मङ्गलानां च मङ्गलम् ।**
**दैवतं देवतानां च भूतानां योऽव्ययः पिता ।।१२।।**

जुन प्रभु नारायण पवित्र भन्दापनि पवित्र मंगलभन्दा मंगल (जसलाई स्मरण गर्दा मनुष्यको मन शान्त स्वच्छ र पावन हुन्छ) छन् । तेत्तीस कोटी देवताका पनि जो स्तुत्य तथा सेवनीय देवता छन् । चर अचर स्थावर जंगम सम्पूर्ण प्राणीका जो पिता तुल्य छन् । (आफ्नो शरणमा परेका प्राणीलाई संरक्षण र स्नेह प्रदान गर्ने पितृवत् व्यवहार गर्दछन्) (अश्वत्थामाको ब्रह्मास्त्रप्रहारबाट भयभीत भै शरणमा परेकी गर्भिणी उत्तराको करुण क्रन्दन सुनी प्रभुले सुदर्शन चक्र प्रहार गरी ब्रह्मास्त्रशमन र उत्तराको गर्भको संरक्षण गर्नुभयो जसबाट परीक्षितको जन्मभयो) ।।१२।।

**यतः सर्वाणि भूतानि भवन्त्यादियुगागमे ।**
**यश्मिंश्च प्रलयं यान्ति पुनरेव युगक्षये ।।१३।।**

युगको प्रारम्भ हुँदा जुन परमेश्वरबाट प्राणीहरू उत्पन्न हुन्छन् । (पहिले ब्रह्माण्ड जलमय छँदा संसार शून्य थियो उक्त जलमा एउटा विराट अण्डा प्रकट भयो र जलमै धेरै समय सम्म स्थिर भै पछी सो अण्डा फुटी त्यसबाट पंचमहाभूत र तन्मात्रा प्रकट भै क्रमशः सोही पंचतत्त्वकै आधारमा संसार र सांसारिक प्राणी प्रकट भए, जसलाई सर्ग वा सृष्टि भनिन्छ) पुनः युगको नाश (संहार) हुँदा जसलाई

प्रलय भन्दछन् उक्त आत्यन्तिक प्रलयमा परी यो सम्पूर्ण सृष्टि र सर्गद्वारा निर्मित चराचर प्राणीहरू उनै प्रभुमा विलीन हुन पुग्दछन् अनि यो समस्त ब्रह्माण्ड पुनः शून्य जलमय हुन्छ ॥१३॥

**तस्य लोकप्रधानस्य जगन्नाथस्य भूपते।**
**विष्णोर्नामसहस्रं मे श्रृणुपापभयापहम् ॥१४॥**

हे युधिष्ठिर! उनै परब्रह्म परमपिता परमेश्वर त्रिलोकपति नारायणका असंख्य नामहरू छन् । तीनै नामहरूमध्येबाट पाप दुःखदुर्भाग्य भय त्रास पीडादि नाश गर्ने विष्णुको सहस्रनाम "विष्णुसहस्रनामावलि" तिमीलाई सुनाउँदछु । ध्यान दिएर सुन ॥१४॥

**यानि नामानि गौणानि विख्यातानि महात्मनः।**
**ऋषिभिः परिगीतानि तानि वक्ष्यामि भूतये ॥१५॥**

जुन सहस्रनाम योगवेत्ता तत्त्वज्ञानी महामुनिहरू श्रीविष्णुमा तन मन अर्पण गरी वारम्बार गाइरहन्छन् । जो अति गौण (साह्रै रहस्यमय अन्य स्तोत्रादि भन्दा उत्तम फलदायी नारायणभक्ति दायक) पनि छ। त्यही सहस्रनामावलि तिम्रो कल्याणका लागि सुनाउँदछु । एकाग्रचितले सुन ॥१५॥

**विष्णोर्नामसहस्रस्य वेदव्यासो महामुनिः।**
**छन्दोऽनुष्टुप् तथा देव भगवान् देवकी सुतः ॥१६॥**
**अमृतांशोद्भवो बीजं शक्तिर्देवकिनन्दनः।**
**त्रिसामा हृदयं तस्य शंखी चक्रीति कीलकम् ॥१७॥**
**गदाधरः शार्ङ्गधन्वा ह्यस्त्रं च परिकीर्तितम्।**
**रथाङ्गपाणिरक्षोभ्यः कवचं समुदीरितम् ॥१८॥**

**उद्भवः क्षोभणो देवः परमोमन्त्रसंज्ञितम्।**
**विष्णोः परमप्रीत्यर्थं विनियोगं च कीर्तितम्॥११॥**

माथि उल्लिखित श्लोक चार पाठ गरी तलका मन्त्रहरू जप्दै हातमा (दाहिने) जल लिई सो जल भुइँमा छाडीदिनु ।। यसलाई विनियोग भन्दछन् ।।

।। अथ विनियोगः ।।

अस्य श्रीविष्णोर्दिव्यसहस्रनामस्तोत्रमहामन्त्रस्य भगवान् वेदव्यास ऋषिः श्रीपरमात्मा विष्णुर्नारायणो देवता अनुष्टुप् छन्दः अमृता शूद्भवो भानुरिति बीजं देवकीनन्दनः स्रष्टेति शक्तिः उद्भवः क्षोभणो देव इति परमो मन्त्रः शंख भृत् नन्दकी चक्रीति कीलकं गदाधरः शार्ङ्गधन्वा इत्यस्त्रं त्रिसामा सामगः सामेति हृदयम् रथाङ्गपाणिरक्षोभ्य इति कवचम् आनन्दः परमो ब्रह्मेति योनिः ऋतुः सुदर्शनः काल इति दिग्बन्धः श्रीविश्वरूप इति ध्यानम् श्रीमहाविष्णुपरमप्रीत्यर्थे जपे पाठे पूजने च विनियोगः ।। (जल भुइँमा छाडीदिने) ।।

।। अथ न्यासः ।।

करादि न्यासः ।। ॐ विश्वं विष्णुर्वषटकार इत्यङ्गुष्ठाभ्यां नमः ।
(बूढी औंला माथि चोर्नी औंला घुमाउने)
ॐ अमृतां शूद्भवो भानुरिति तर्जनीभ्यां नमः ।।
(बूढी औंला मुनि चोर्नी औंला घुमाउने)
ॐ ब्रह्मण्यो ब्रह्मकृद् ब्रह्मेति मध्यमाभ्यां नमः ।।
(बूढी औंला मुनि माझी औंला घुमाउने)
ॐ सुवर्णविन्दुरक्षोभ्य इत्यनामिकाभ्यां नमः ।।

(बूढी औंला मुनि साँहिली औंला घुमाउने)

ॐ निमिषोऽनिमषः स्त्रग्वीति कनिष्ठिकाभ्यां नमः ।।

(बूढी औंला मुनि कान्छी औंला घुमाउने)।

ॐ रथांगपाणिरक्षोभ्य इति करतलकरपृष्ठाभ्यां नमः ।।

(दुवै हत्केला तलमाथी गरी थपड़ी बजाउने)

।। हृदयादि न्यायः ।।

ॐ विश्वं विष्णुवषट्कार इति हृदयाय नमः ।।

(दाहिने हातले छातीमा छुने)

ॐ अमृतांशूद्भवो भानुरिति शिरसे स्वाहा ।।

(निधार भन्दा माथि शिरमा छुने)

ॐ ब्रह्मण्यो ब्रह्मकृद् ब्रह्मेति शिखायैवषट् ।।

(शिखामा छुने)

ॐ सुवर्णविन्दुरक्षोभ्य इति कवचाय हुम् ।।

(दुवै हात बाँधी कुममा छुने)

ॐ निमिषोऽनिमिषः स्त्रग्वीति नेत्रत्रयाय वौषट् ।।

(साहिंली र बुढी औंला २ आँखामा र माझी औंला निधारमा (ललाटमा) पर्ने गरी छुने)

ॐ रथांगपाणिरक्षोभ्य इति अस्त्राय फट् ।।

दाहिने हात शिरमा घुमाई शिर वरीपरी चुटकी बजाउँदै देब्रे हत्केलामा ल्याई थपडी बजाउने)

ध्यानः– बुढी औंला र माहिली साहिली कान्छी औंलाले क्रमशः विस्तारै विस्तारै नाकको छिद्र थिच्ने र खोल्ने गरी श्वास (साँस)

रोक्ने र छाड्ने प्रकृया अपनाउने । देब्रे हात उत्तानो पारी देब्रे घुँडामाथि राख्ने । त्यसपछि आँखा चिम्लिएर परमेश्वर शंख चक्रगदापद्मधारी नारायणको दिव्य स्वरूपलाई हृदयकमलमा उतारेर "ॐ नमो नारायणाय" मन्त्रलाई मनैमन उच्चारण गरी श्वाशलाई रोकेर विस्तारै विस्तारै नाइटो छाती र मस्तिष्कमा रोक्ने प्रयत्न गर्ने । मनैमन ॐ रेचकं शोधयामि । ॐ पूरकं शोधयामि । ॐ कुम्भकं शोधयामि । भनी प्राणवायुलाई पुनः स्वस्थानमा संचार गराउने ।।

।। हातजोडी प्रार्थना गर्ने ।।

**ॐ शान्ताकारं भुजगशयनं पद्मनाभं सुरेशं**
**विश्वाधारं गगन सदृशं मेघवर्णं शुभाङ्गम् ।**
**लक्ष्मीकान्तं कमलनयनं योगिभिर्ध्यानगम्यं**
**वन्दे विष्णुं भवभयहरं सर्वलोकैकनाथम् ।।**

शान्त आकार भएका, (एकटकले हेरीरहूँ जस्तो लाग्ने) सर्पमा (हजार फणा भएको शेषनागमा) शयन गर्नुहुने, (सर्पमाथि बसेर पनि भयरहितभै शान्त आकार हुनु यो कस्तो विचित्रको विडम्बना हो? यो सबै प्रभुकै तारतंम्य हो) जुन प्रभुको नाभिस्थलबाट कमल उत्पन्न भएको छ । (जसमा चतुर्मुख ब्रह्माले स्थान प्राप्त गरेका छन्) जो समस्त ३३ कोटी देवताका पनि पूज्य देवता (स्वामी) छन् । समस्त विश्व ब्रह्माण्डका एकमात्र आधार छन् उनै प्रभुनारायण आकाश समान (ओरछोर नदेखिने) सर्वत्र व्याप्त छन्, मेघको जस्तो जस्को नीलो वर्ण छ, जस्को अंग साह्रै राम्रो छ, (यहाँ राम्रो भन्नाले दृष्टि सुन्दर न ठानी भक्तिभाव सुन्दरताको कल्पना गर्नुपर्दछ) भगवती

लक्ष्मीका अति प्यारा पति (कान्तं प्रियतमं सौम्यं सदा सामीप्य संस्थितम्) जस्को कमलसमान आँखा छन्, (दिउसो फक्रेको कमलमा भँवरा पराग चुसीरहन्छ साँझ परेको उसलाई थाहै हुन्न, साँझ परेपछि कमल संकुचित हुँदै हुँदै अन्तमा भँवरा त्यसैमा बन्द हुन्छ र त्यसैभित्र रातभरी छटपटाईरहन्छ, भोली पल्ट सूर्यउदाएपछि भर्खर खिल्न लागेको सेतो कमलकोशमा कालो भँवराको अंगलाई नेत्रको कोश र नानीको मधुरतम कल्पना गरि विद्वान् कविले सुन्दर नेत्रलाई "कमलनयन" को संज्ञा दिएका हुन्) प्रसिद्ध सिद्ध योगीहरू आत्मयोगको प्रतापले मात्र जसलाई हृदयभित्र देख्न सक्छन्, त्यस्ता सम्पूर्ण लोकका एकमात्र स्वामी ईश्वर जो सांसारिक भय (जन्म मरण चौराशी लाख जुनिको चक्कर) लाई हरिदिन्छन् उनै प्रभु बैकुण्ठाधिपति श्रीहरि विष्णुलाई बारम्बार नमस्कार गर्दछु ।।

**सशंखचक्रं सकिरीटकुण्डलं**
**सपीतवस्त्रं सरसीरूहेक्षणम् ।**
**सहारवक्षस्थलकौस्तुभश्रियं**
**नमामि विष्णुं शिरसा चतुर्भुजम् ।।**

जनु प्रभु चार बाहुमा शंख चक्र गदा पद्म धारण गर्दछन्, कीरीट कुण्डल मणि माणिक्य वैजयन्ती माला अदि जसका आभूषण छन्, भर्खरै खिल्न लागेको कमलजस्ता जसका नेत्र छन्, जो पहेंलो र उज्वल पीताम्बर पहिररन्छन्, जसको वक्षस्थलमा कौस्तुभ मणि शोभायमान छ, (भृगुपदचिन्हलाई नारायणले कौस्तुभमणिको संज्ञा दिनु भएको हो) त्यस्ता चारभुजा धारी श्रीनारायण विष्णुलाई शिर नुहाइ कोटी कोटी नमस्कार गर्दछु ।।

ॐ विष्णवे नमः । ॐ नारायणाय नमः । ॐ लक्ष्मीपतये नमः। ॐ माधवाय नमः । ॐ बैकुण्ठनाथाय नमः ।। ॐ हरयेनमः । ॐ परमात्मने नमः । ॐ जगदीश्वराय नमः ।

।। ॐ नमो नारायणाय ।।

अब विष्णुसहस्रनाम स्तोत्र पाठगर्ने हो भने शुरूशुरू श्लोकहरू पाठ गर्ने ।

तुलसीपत्र पुष्प आदि चढाउने हो भने प्रत्येक नामपछी नमः नमः भनी चढाउने ।

हवनादि गर्ने हो भने प्रत्येक नामको पछाडी स्वाहा स्वाहा भनि हवन गर्ने ।

।। विष्णुसहस्रनामस्तोत्रपाठ ।।

**ॐ विश्वं विष्णुर्वषट्कारो भूतभव्यभवत्प्रभुः ।**
**भूतकृद्भूतभृद्भावो भूतात्मा भूतभावनः ।।**

वैकुण्ठाधिपति शेषशायी लक्ष्मीपति नारायण श्रीविष्णुलाई कोटी कोटी नमस्कार गर्दछु, जस्को कृपा पाए मात्र उनै प्रभुको सहस्रनामको गुणगान गर्न सक्नेछु ।

**जय श्रीहरिः ।।**

संसारमा सबैतिर व्याप्त भएका, (कण कणमा भगवान्) यज्ञका मूर्ति स्वरूप भएका, (चतुर्भिश्च चतुर्भिश्च द्वाभ्यां पञ्चभिरेवच । हूयते च पुनर्द्वाभ्या स मे विष्णुः प्रसीदतु) भूत वर्तमान र भविष्य तीनै कालका ज्ञाता र स्वामी, प्राणीमात्रको उत्पत्ति स्थिति र संहारका कारण भएका, (श्रीनारायणको निर्देशन अनुसारनै श्रीब्रह्माजी सृष्टि

तथा श्री शिवजी संहार गर्दछन्) प्राणीमात्रका सर्वतत्त्वमय अस्तित्व स्वरूप, (हात्तीदेखी भुसुना सम्म सबमा बस्छन् श्रीहरिनै) चराचर जगतका सम्पूर्ण प्राणीहरूको एक एक कर्ममा दृष्टि राखी कर्मक्षेत्रमा संलग्न गराउने, (मनुष्य केवल निमित्त हुन्छन् कर्ता धर्ता प्रभुनै हुन्, उनीनै दिन्छन् उनीनै हर्छन् सारा प्रभुकै लीला हुन्) यस्ता प्रभुलाई नमस्कार छ (प्रत्येक श्लोकको अन्त्यमा "वन्दे नारायणं हरिम्" भन्नु श्रेयस्कर छ ।।१।।

**पूतात्मा परमात्मा च मुक्तानां परमं गतिम् ।**
**अव्ययः पुरुषः साक्षी क्षेत्रज्ञोऽक्षर एव च ।।२।।**

सत्व रज तम आदि गुणले जसलाई छुन सक्तैन त्यस्ता पवित्र आत्मा भएका, (गुणातीतो हरिर्ब्रह्म) जुन ईश्वर सांसारिक द्वन्द्व रहित भै स्वयंमा रमाई आनन्दस्वरूप भै बस्दछन्, विषयादि प्रपञ्चबाट मुक्त भएका व्यक्तिहरूलाई परमगति दिने, (योगीनामुत्तमा गतिः) कहिल्यै नाश न हुने, सगुण र निर्गुण दुवै रूपले आराध्य परमपुरुष पुरुषोत्तम प्राणीमात्रको धर्म र पापको विवेचना गर्ने साक्षी स्वरूप, मनुष्यादि चराचर प्राणीको शरीर रूपी क्षेत्रको कर्म विकर्म आदि निरीक्षण गरी शुभाशुभ फल प्रदान गर्ने, कहिल्यै विखण्डन र च्युत न हुने अक्षर अच्युत चैतन्य स्वरूप परमेश्वर ।।२।।

**योगो योगविदां नेता प्रधान पुरुषेश्वरः ।**
**नारसिंहवपुः श्रीमान् केशवः पुरुषोत्तमः ।।३।।**

जो प्रभु नारायण स्वयं योगस्वरूप र योगजान्नेहरूका अग्रणी छन्, प्रकृति पञ्चतत्त्व तन्मात्रा युक्त पुरुषहरूका स्वामी छन्, जसले

नर र सिंह (नृसिंह) रूप धारण गरी हिरण्यकशिपुको बध र भक्त प्रह्लादको उद्धार गरे, जो ब्रह्मादि देवताका पनि स्वामी समुद्रतनया लक्ष्मीका पति (श्रीपति) हुन्, जो जलमा शयन गर्दछन्, जो परम पुरुष पुरुषोत्तम हुन्, ब्रह्मा शिव इन्द्र सूर्य वरुणादि जसका आधीन छन् ।।३।।

**सर्वः शर्वः शिवः स्थाणुर्भूतादिनिधिरव्ययः ।**
**सम्भवो भावनो भर्ता प्रभवः प्रभुरीश्वरः ।।४।।**

जो सर्वव्यापक छन्, उत्पत्ति पालन र संहार तीनै कार्यका कारण छन्, कल्याण दायक छन्, स्थिर र निश्चल छन्, स्वयं उत्पन्न र लीन हुन्छन्, सम्पूर्ण प्राणीमात्रका ध्येय समर्चनीय र स्तुत्य छन्, नैसर्गिक नैमित्तिक र आत्यन्तिक प्रलय हुँदा पनि जो शेष रहन्छन्, जो सर्वगुण सम्पन्न र शक्तिशाली छन् ।।४।।

**स्वयम्भूः शम्भुरादित्यः पुष्कराक्षो महास्वनः ।**
**अनादिनधनो धाता विधाता धातुरूत्तमः ।।५।।**

जो स्वयं प्रकट हुन्छन्, भक्तहरूको आर्तनादमा द्रवित भै तिनका उद्धारका लागि सदा तत्पर रहन्छन्, (आर्तनाद सुनी दुःखी द्रौपदी र गजेन्द्रको, तत्काल आई प्रभुले गरे उद्धार भक्तको) सूर्यसमान तेजस्वी, कमलजस्तो नेत्र भएका, उच्च आवाज भएका (जस्को शब्द सुने मात्रै तर्सन्छन् दैत्यदानव) जो जन्म र मृत्यु भन्दा पर छन्, सम्पूर्ण विश्वलाई जो आफूभित्र लीन गर्न सक्छन्, मनुष्यको कर्मानुसार फलको निर्माण गर्ने, धातुहरू (सुन चाँदी ताँवा पीतल काँस फलाम आदि) मा उत्तम धातु सुवर्ण समान भएका ।।५।।

अप्रमेयो हृषीकेशः पद्मनाभोऽमरप्रभुः ।
विश्वकर्मा मनुस्त्वष्टा स्थविष्ठः स्थविरो ध्रुवः ॥६॥

जसलाई यस्तैहुन् भनी वास्तवमा चिन्न सकिन्न, जो इन्द्रियहरूका स्वामी (इन्द्रियलाई जितेका) छन्, जसको नाभि स्थलबाट कमल उत्पन्न भएको छ, जो तेत्तिस कोटी देवताका अधिष्ठाता स्वामी हुन्, विश्व (भुर्भुवः स्वः) का निर्माता, आदि मनुका रचयिता, ज्येष्ठतर (परिपक्व बृद्ध) भएर पनि सदा निश्चल र स्थिर भएर रहने ॥६॥

अग्राह्यः शाश्वतः कृष्णो लोहिताक्ष्यः प्रतर्दनः ।
प्रभूतस्त्रिककुब्धामः पवित्रं मङ्गलं परम् ॥७॥

कसैले पनि सजिलै संग भेट्टाउन न सकिने, सदा सर्वदा स्थिर रहने तथ्य सत्य स्वरूप, सबैका (ध्यानी योगी मुनिजन भक्त औ शरणागतका) आकर्षणका केन्द्र भएका, सुन्दर राता आँखा भएका, दानवादि दुष्टहरूलाई ताडन गर्ने, (नाशगर्ने) बैकुण्ठ गोलोक आदि सर्वगुणसम्पन्न ऐश्वर्यले युक्त,जसको काँधमा तीनधाम (ब्रह्मलोक, शिवलोक र विष्णुलोक) निहित छ, सम्पूर्ण लोकलाई पवित्र र अति मांगलिक बनाई ती लोकका निवासीको कल्याण गर्ने ॥७॥

ईशानः प्राणदः प्राणो ज्येष्ठः श्रेष्ठः प्रजापतिः ।
हिरण्यगर्भो भूगर्भो माधवो मधुसूदनः ॥८॥

सम्पूर्ण जीवहरूमा प्राणसञ्चार गर्ने, मनुष्यहरूलाई कर्म गर्ने प्रेरणा गर्ने, प्राणवायुस्वरूप, आदिसृष्टिकालदेखिका सबै भन्दा जेठा र श्रेष्ठ, (उत्तमोत्तम) चतुर्मुखी ब्रह्मा द्वारा सर्जित प्रजा (प्राणीमात्रका) पति, जसको वासस्थान सुवर्णको गोलार्धभित्र छ, जुन परमेश्वर

भित्र समस्त पृथिवी अटाउँछिन् लक्ष्मीका पति माधव, (इन्दिरा लोकमाताका क्षीरोदतनया रमा) (धवः पतिः प्रियो भर्ता) मधुनामक दैत्यका संहारक ।।८।।

**ईश्वरो विक्रमी धन्वी मेधावी विक्रमः क्रमः ।**
**अनुत्तमो दुराधर्षः कृतज्ञः कृतिरात्मवान् ।।९।।**

सृष्टि स्थिति संहार उत्पत्ति विलय आदिकार्य गर्न सदा समर्थ हुने, सदा विजय प्राप्त गर्ने, शार्ङ्गनामक धनुर्धारण गर्ने, बुद्धिमान्, पराक्रमी, समयसापेक्ष भै क्रमै संग कार्यसम्पादन गर्ने, जुन नारायण भन्दा उत्तम अरू कोही छैन, (भक्तिभावमा लीन भएमा उत्तम गति प्रभु दिन्छन्) जुन प्रभुको सामर्थ्य के कति छ भनी कसैले कल्पना नै गर्न सक्तैन, प्रभुपति समर्पित भै निष्काम कर्म गर्ने भक्तहरूको कार्यको मूल्यांकन गर्ने, सदा क्रियाशील रहने, आफूभित्र सदा रमाईरहने (कुन बेलामा गर्नुपर्छ के भन्ने चिन्तनशील हुने) श्रीहरि ।।९।।

**सुरेशः शरणं शर्म विश्वरेताः प्रजाभवः ।**
**अहः सम्वत्सरो न्याल प्रत्ययः सर्वदर्शनः ।।१०।।**

सम्पूर्ण देवताहरूका स्वामी, शरणमा परेका भक्तहरूको शरण लिने, प्रभुनै मेरा भर्ता धर्ता भनि विषयादि त्यागि प्रभुचिन्तनमा मग्न रहने व्यक्तिको कल्याण गर्ने प्रजा (चराचर प्राणी) उत्पन्न गर्ने, दिनस्वरूप, सम्वत्सर (प्रभवादि ६० सम्वत्सर जो प्रतिवर्ष चलायमान् हुन्छन्) स्वरूप, सर्परूप, (शेषनाग स्वरूप) सदा निर्विकल्प भै शरणागतिको लागि विश्वास गर्न सकिने, चर्मचक्षुबन्द गरी ज्ञानचक्षुले हेर्दा जताततै देखिने ।।१०।।

**अजः सर्वेश्वरः सिद्धः सिद्धिः सर्वादिरच्युतः।**
**वृषाकपिरमेयात्मा सर्वयोगविनिःसृतः ।।११।।**

जुन भगवानको जन्म हुँदैन, जो सबैका ईश्वर हुन्, जसको भक्ति गर्दा सबैकुरा सिद्ध पारिदिन्छन्, सिद्धिका स्वरूप छन्, सबका आदि कारण हुन्, जो सदा अच्युत छन्, (मानव हुन्छन् च्युत सर्वत्र अच्युत ता हरिमात्रै छन्) धर्मनिष्ठ भई कर्म गर्ने व्यक्तिको सबै इच्छा पूर्ण गर्ने, जसको आत्मा कहिल्यै परिवर्तन हुँदैन सबै प्रकारको जञ्जालबाट जो मुक्त र धेरै पर छन् ।।११।।

**वसुर्वसुमनाः सत्य समात्मा सम्मितः समः।**
**अमोधः पुण्डरीकाक्षो वृषकर्मा वृषाकृतिः।।१२।।**

विश्वको वैभवस्वरूप भएका, सत्यस्वरूप, सबको लागि बराबर स्नेह गर्ने आत्मास्वरूप भएका, (राजा हुन् वा रंक सबैका लागि माया बराबर, श्रीहरि गर्छन् छैन पृथकता मायाका हुन् धरोहर) तीनै लोकवासीद्वारा सम्मान गरिने, सबैमा कर्मानुसार बराबर फल दिने, जो निर्विकार र निर्गुण छन्, जसको कमलजस्तो नेत्र छ, धर्मरक्षाको लागि सदा तत्पर भइरहने, (परित्राणाय साधूनां विनाशाय च दुष्कृताम्। धर्मसंस्थापनार्थाय संभवामि युगे युगे ।।) गीतामा भगवानको यस्तो उक्ति छ। जस्को धर्म नै स्वरूप छ,धर्मले मात्र प्रभुप्राप्ति हुन्छ ।।१२।।

**रुद्रो वहुशिरा बभ्रुर्विश्वयोनिः शुचिश्रवाः।**
**अमृतः शाश्वतस्थाणुर्वरारोहो महातपाः ।।१३।।**

संहारकार्यमा रौद्ररूप धारण गर्ने, धेरै शिर भएका, (विराट स्वरूपमा प्रभुको धेरै शिर हुन्छ) सम्पूर्ण लोकलाई पालन गर्ने, (के चिन्ता

लिनु व्यर्थमा छ हरिको नामै त विश्वम्भर) जो जगत् चराचरको उत्पत्ति र लयका कारक छन्, जसको नाम नै उत्तम पवित्र र सुनीरहूँ जस्तो छ, (नारायण नारायण श्रीहरिः जपी रहूँ उन्को नाम संधै भरी) जो अमृतमय छन् जसको कथा सुधारसमय छ (कथामृतरसास्वाद पीईरहूँ निरन्तर) जो शाश्वत स्थिर र अनश्वर छन्, जसको वाहन उत्तम ज्ञान भएका र सदा नारायण नाम जपीरहने गरूड छन्, जो तपस्वीहरूमा श्रेष्ठ छन् ॥१३॥

सर्वगः सर्वविद्भानुर्विष्वक्सेनो जनार्दनः।
वेदो वेदविदव्यङ्गो वेदाङ्गो वेदविद् कविः॥१४॥

अबाध गतिले जहाँ पनि जानसक्ने, सम्पूर्ण तत्त्व र तथ्य जान्ने, (घट घट वासी भएर हरिले भक्तकर्म सब बुझ्दछन्) जो सूर्यसमान तेजस्वी छन्, शत्रुका सेनालाई सुदर्शन चक्र प्रहार गरी तितर बितर पार्ने र संहार गर्ने, दुष्टदलन गर्ने, सबै कुरा जान्ने, वेदको सार र वास्तवतत्त्व जान्ने, चर्मचक्षुले देख्न नसकिने (चर्मचक्षुका अन्धालाई दिन्नन् दर्शन श्रीहरि। ज्ञानचक्षु उधारी हेरे मिल्दछ प्रभुछवि माधुरी॥) वेद (ऋक् यजु साम अथर्व) हरूलाई आफ्नो मुखारविन्दबाट प्रकट गर्ने, वेदको मुख्य वास्तविकतालाई धर्मको मूल आधार मान्ने, इन्द्रियातीत भै इन्द्रियगोचर न हुने कुराहरू स्पष्ट देख्ने, (विषय वासना मोह र ममता लोभ र क्रोध त्यजेर। खोजौं श्रीहरिलाई नित्य मानवधर्म बुझेर) ॥१४॥

लोकाध्यक्षः सुराध्यक्षो धर्माध्यक्षः कृताकृतः।
चतुरात्मा चतुर्व्यूहश्चतुर्दंष्ट्रश्चतुर्भुजः॥१५॥

सबै (भूर्भुवःस्वः) लोकका स्वामी, तेत्तीशकोटी देवताका पनि स्वामी, धर्महरूका पनि स्वामी, कार्य र कारण दुवैका प्रमाण स्वरूप (उनी नै रच्छन् जगजन प्राणी गर्छन् लीन स्वयंमा, जसरी जाल बुनी माकुरो समेट्छ फेरी उसैमा) चार आत्मा चारव्यूह चारदाँत (दाह्रा) र चारहात भएका, (भगवानको विराट स्वरूपमा यी सबै दृष्टिगोचर हुन्छन्) ॥१५॥

**भ्राजिष्णुर्भोजनं भोक्ता सहिष्णुर्जगदादिजः।**
**अनघो विजयो जेता विश्वयोनिः पुनर्वसुः ॥१६॥**

सदा प्रकाशमान भैरहने, (सदा हसीँलो मुखमण्डलले पार्छन् उज्वल लोक) भोजन पनि उनैहुन् भोक्ता पनि उनै हुन्छन्, (अन्नं ब्रह्मा रसो विष्णुर्भोक्ता देवो महेश्वरः) जो सहनशील छन्, (भक्तका वशमा हुन्छन् भगवान् ती कृपालु छन्) यो जगत् संसारको रचना हुनु भन्दापनि पहिले प्रकट भएका, (संसार पहिले जलमय र शून्य थियो त्यही जलकटाहमा अण्डस्वरूप भगवान प्रकट भएर त्यो अण्ड फुटी त्यसैबाट पञ्चमहाभूत र तन्मात्रावाट यो संसारको रचना भएको भन्ने कुरा पुराण हरूमा वर्णित छ) जो भगवान् पापरहित छन्, आफ्नो गुण ज्ञान र शक्तिले विश्वमा विजय प्राप्त गर्दछन्, यो संसारको मूल कारण भएका, अजन्मा भएर पनि लीला गर्न र दुष्टसंहार गर्न नानारूप धारण गरी शारीरी भएर जन्मने ॥१६॥

**उपेन्द्रो वामनः प्रांशुरमोघः शुचिरूर्जितः।**
**अतीन्द्रः संग्रहः सर्गो धृतात्मा नियमो यमः ॥१७॥**

देवराज इन्द्रका भाई, सानो (पुडके) बालकरूपी (वामन अवतार धारण गरी दैत्याधिपति वलीको निग्रह गर्ने) जसले गरेको कार्य

निरर्थक हुँदैन, (प्रभु जुनसुकै कार्य गर्दा पनि काल अवस्था र औचित्य विचार गरेर मात्र गर्दछन्) जो शुद्ध र चैतन्यस्वरूप पनि छन्, इन्द्रिय-हरूलाई सदा विजय प्राप्त गरेका छन्, ज्ञानी योगी वैरागी ध्यानीहरूको स्तुति ध्यान र समर्चनलाई संग्रह गर्दछन्, सृष्टिका कारण भएका, स्थिर आत्मा भएका, सृष्टि स्थिति र संहारको नियमलाई यथावत् पालन गर्ने, सम्पूर्ण प्राणीहरूका हृदयमा निवास गर्ने ।।१७।।

**वेद्यो वैद्यः सदायोगी वीरहा माधवो मधुः ।**
**अतीन्द्रियो महामायो महोत्साहो महाबलः ।।१८।।**

निष्काम भावले फलको इच्छा रहित भै सेवा गर्नेले मात्र जान्न सकिने, दीनार्तहरूको पीडा हटाउने वैद्य स्वरूप, सदा योगमा लीन भैरहने, मलाई कसैले केही गर्न सक्तैन भन्ने अभिमान गरी संसारलाई त्रस्त पार्ने हिरण्यकशिपु आदि वीर दैत्यहरूको संहार गर्ने, मायाले छुन नसक्ने ब्रह्मवेत्ता ज्ञानी मुनिहरूका स्वामी, अमृतमय, इन्द्रियभन्दा धेरै पर रहेका, मायावीहरूमा श्रेष्ठ मायावी (जसले नक्कली प्रलयको रचना गरी मार्कण्डेय मुनि मनु अक्रूर आदिलाई आश्चर्यचकित पारे) अति उत्साह (पराक्रम) भएका, अति बलशाली ।।१८।।

**महाबुद्धिर्महावीर्यो महाशक्तिर्महाद्युतिः ।**
**अनिर्देश्यवपुः श्रीमानमेयात्मा महाद्रिधृक् ।।१९।।**

ठूलो बुद्धि भएका, महान् वीर्यशाली, महान् शक्तिशाली, परम तेजस्वी, जसको शरीर यस्तो छ भनी आँक्न न सकिने, (कहिले धर्छन् वामनरूप कहिले रूप विराट, कहिले बन्छन् माछा कछुवा बँदेलरूप स्वराट) सदा शोभायमान र ऐश्वर्यवान रहने, विशाल

आत्मा भएका, ठूलो पर्वतलाई उठाई आफ्नो पिठ्यूँमा अड्याउने (मंथन गर्दा सागरको डुब्यो अद्रि मैनाक। कच्छप रूप धरेर पिठ्यूँमा बोकी राख्नुभो धाक ।।) ।।१९।।

**महेष्वासो महीभर्ता श्रीनिवासः सतां गतिः ।**
**अनिरूद्धः सुरानन्दो गोविन्दो गोविदां पतिः ।।२०।।**

शार्ङ्गनामक विशाल शक्तिशाली धनुष धारण गर्ने, सम्पूर्ण पृथ्वीलाई पालन गर्ने, समुद्र मन्थन गर्दा उत्पन्न भएकी महालक्ष्मी द्वारा सदा समीपमा बसी सेवा गरिने, सज्जनहरूलाई मोक्षत्त्व गति सदा दिने, कसैले रोकेर न रोकिने,देवताहरूलाई सदा आनन्द प्रदान गर्ने, (दैत्यहरूले बारम्वार हमला गरी लिई स्वर्ग। भागी लुक्नु पर्‍यो देवले गरी निवास उत्सर्ग । हरिले दानवदलन गरेर देवहरूको थाती। फेरी प्राप्त गराई दिनुभो खुशी भए भलिभाँती) पृथ्वीको उद्धार गर्ने, (हिरण्याक्षले पृथ्वीलाई सागर भित्र डुबायो । वराह रूप ली मार्नु भएर पुनः पृथिवी सुहायो) वेदका ज्ञाता वशिष्ठादि मुनिहरूका पूजनीय स्वामी ।।२०।।

**मरीचिर्दमनो हंसः सुपर्णो भुजगोत्तमः ।**
**हिरण्यनाभः सुतपाः पद्मनाभः प्रजापतिः ।।२१।।**

सूर्य समान महातेजस्वी, दुष्ट दुर्दान्त दैत्यहरूलाई दमन गर्ने, सांसारिक पाशो (काम क्रोध लोभ मोह आदि) बाट मुक्त गराई आत्मतत्त्वको बोध गराउने, निर्बाध गतिले गन्तव्यस्थानमा पुग्ने गरूड समान, सर्पहरूमा श्रेष्ठ (वासुकी तक्षक कर्कोटक अनन्त आदि) सुवर्णको नाभि भएका,सदा सर्वदा ध्यान मग्न भै तपस्या लीन भएका,

स्वनाभिबाट कमलनाल उत्पन्न गराई ब्रह्माजीको वासस्थान रचना गर्ने, चर अचर स्थावर जंगम कीट पतंग देखि मनुष्य पर्यन्त प्रजाका स्वामी, जो तिनका (प्राणीमात्रका) हितचिन्तन गरीरहन्छन् ।।२१।।

**अमृत्युः सर्वदृक् सिंहः सन्धाता सन्धिमान् स्थिरः ।**
**अजो दुर्मर्षणः शास्ता विश्रुतात्मा सुरारिहा ।।२२।।**

जो नारायण मृत्युदेखि पर (अमर) छन्, उनको दृष्टि सबैतिर पुग्दछ, (त्यस्तो स्थान कहीं छैन न देख्दा हुन् जहाँ हरि) सिंह समान, (बलवान् श्रेष्ठ ओजस्वी अद्वितीय र स्वेष्टग) विश्वब्रह्माण्डलाई राम्रो संग धारण गर्ने, अजन्मा र निर्गुण भएर पनि प्राणीमात्रको (देव नर पशुआदिको) दुःख निवारण गर्न नानारूप धारण गरी प्रकट हुने, निश्चल भएर स्थिर रहने, जन्म र मृत्यु देखि पर रहेका, (जसको जन्म र मृत्यु हुँदैन तैपनि माया द्वारा नानारूप धरीकन बन्छन् सबका तारणहारा । जसलाई दैत्यादि दुष्टहरू छुन पनि सक्तैनन् प्रभुको प्रतापी तेज सहन गर्न नै सक्तैनन्– जुन प्रभु सबलाई शिक्षा दिन्छन् (मानवजीवन जलबुद्बुदझैं पारी (खेर न फालौं। सदैव आध्यात्मिक चिन्तनमा लागी सफल तुल्याऔं) जसको आत्मा विशुद्ध कोमल र द्रवित छ, (भक्तहरूको आर्तनादमा द्रवित तुल्याई आत्मा । रक्षा गर्छन् प्रकट भएर सुखदायी परमात्मा) जसले कैयौं पटक देवताहरूका शत्रु भएका दैत्यहरूको संहार गरी देवताको रक्षा गरे ।।२२।।

**गुरूर्गुरूततो धाम सत्यः सत्यपराक्रमः ।**
**निमिषोऽनिमिषः स्रग्वी वाचस्पतिरूदारधीः ।।२३।।**

सबलाई शिक्षादिने (गुरूर्ब्रह्मा गुरूर्विष्णुः) गुरुहरूमा श्रेष्ठतम् ज्ञानप्रदायक, (ब्रह्मवेत्ता मुनिगण जस्लाई मान्दछन् गुरू) जसको

वासस्थान परमपावन धाम (बैकुण्ठ) छ, जो स्वयं सत्य र तथ्य स्वरूप छन्, (प्राणी सारा नश्वर हुन्छन् नारायण छन् सत्य अनश्वर ) उनको पराक्रम पनि सत्य (अजेय र अमोघ) छ, योगको निन्द्रामा लीन भएर पनि लोकको कल्याणका लागि सर्वदा जागरूक रहने, वैजयन्ती माला (कहिल्यै पनि न वैलाउने र न सुक्ने विशिष्ट सुरभिसम्पन्न कमलको माला) धारण गर्ने, विद्या निगम आगम श्रुति स्मृति पुराण आदिका स्वामी, उदारबुद्धि भएका ।।२३।।

**अग्रणीर्ग्रामणीः श्रीमान्न्यायो नेता समीरणः।**
**सहस्रमूर्धा विश्वात्मा सहस्राक्षः सहस्रपात् ।।२४।।**

योग अध्यात्म ध्यान ज्ञान प्राप्तगर्ने मोक्षपथगामीहरूका सर्वश्रेष्ठअग्रणी, चर अचर स्थावर जंगम आदि प्राणीहरूका स्वामी, सदा सर्वदा शोभायमान, कर्मपथमा अग्रेसर भै फल प्राप्तिको इच्छा त्यागी सम्पूर्ण कर्म ईश्वरमा समर्पण गर्ने, उपासकको लागि न्यायपूर्वक ज्ञान र मोक्ष प्रदान गर्ने समस्त चराचर प्राणीलाई कर्मगर्न नेतृत्व प्रदान गर्ने, वायुसमान अदृश्य भएर पनि सबैमा प्रवेश गर्ने, हजारवटा शिर हजारवटा आँखा हजारवटा पाउ भएका (विराटस्वरूपको परिकल्पना) अन्तर्यामी तथा चराचर विश्वका आत्मास्वरूप ।।२४।।

**आवर्तनो निवृत्तात्मा सम्वृतः सम्प्रमर्दनः।**
**अहः संवर्तको वन्हिरनिलो धरणीधरः ।।२५।।**

संसारलाई कुम्हालेको चक्रसरी घुमाउने आफूचाहीं सांसारिक बन्धनादिबाट सदा टाढा रही रमाइलो हेरिरहने, संसारलाई मायाजालले ढाकेर आफू अदृश्य रहने, (नाना भेष धरी पुग्छन् भक्तका घरमा

उनी। भक्तले चिन्न सक्तैनन् मायाले ढाकिंदा हुँदी । सहारकालका रूद्र झैं बनी दुष्ट दैत्यहरूको संहार गर्ने, संसारलाई संचालन गर्ने सूर्यस्वरूप (सूर्योदय भै सूर्य प्रकाश पाई सारा चराचर, धर्मकर्ममा उद्यत हुन्छन् कर्मयोगी सब सरासर) प्रलयकालका मेघसमान (प्रलय कालमा संवर्तक नामका मेघले अविरल हात्तीको सूँढ जस्तो जल बर्षाई पृथ्वी जलमय भै डुब्छिन् भन्ने पौराणिक कथम छ) प्रचण्ड तेज (राप) भएका अग्निसमान, उग्रगति भएका वायुसमान (आँधीतुल्य), (यी सबै प्रलयकालका लक्षण हुन्) पृथिवीलाई धारण गर्ने, (देवी त्वं विष्णुना धृता) ॥२५॥

**सुप्रसादः प्रसन्नात्मा विश्वधृग् विश्वभुग् विभुः ।**
**सत्कर्ता सत्कृतः साधुर्जन्हुर्नारायणो नरः ॥२६॥**

सदा सर्वदा प्रसन्न रहने, जसको आत्मानै स्वच्छ र प्रसन्न छ, विश्वविराटरूप धारण गर्ने, समस्त विश्व ब्रह्माण्डको उपभोग गर्ने, (नारायणकै इच्छा द्वारा सिर्जित हुन्छन् विश्व सब, उनकै इच्छामा सब हुन्छन् लीन उनैमा चराचर) श्रीहरि जताततै व्याप्त छन् (जलमा थलमा रजकणकणमा पशुपक्षी नरमा, मूल रूपमा हरि छन् व्याप्त उनकै हो रटना) उनीद्वारा रचित कार्य सबै सत्यमय हुन्छन्, ध्यानी योगी मुनि देवता यक्ष गन्धर्व किन्नर आदि सबै हृदयदेखि उनको सत्कार गर्दछन् जसको आचरण कर्म र व्यवहार उत्तम हुन्छ, जसको वास जलमा (क्षीरसागरमा) छ, (जलमा निवास गर्नुहुने भएकोले नै प्रभुको नाम नारायण भएको हो) सम्पूर्ण चराचर जगतलाई कर्म गर्न प्रेरणा दिने ॥२६॥

असंख्येयोऽप्रमेयात्मा विशिष्टः शिष्टकृच्छुचिः ।
सिद्धार्थः सिद्धसंकल्पः सिद्धिदः सिद्धिसाधनः ॥२७॥

श्रीहरि एक भएरपनि अनेक छन् जसको गणना नै गर्न सकिन्न, (जलचर थलचर पादप पक्षी उभयचरादि सबैमा, प्राण भईकन हरिनै बस्छन् के गरी गर्ने गणना) प्रभुकस्ता छन् भनी यथार्थ चरित्र चित्रण कसैलेपनि गर्न सक्तैन, सम्पूर्ण लोकमा विशिष्ट स्थान र देवादिद्वारा सन्मान गरिने, सम्पूर्ण जगतलाई उच्चतर शिक्षाप्रदान गर्ने, (गर कर्म संधै भर) जो नारायण सदा शुद्ध र पवित्र छन् (जस्को स्मरण गर्नाले छुट्दछन् भव बन्धन) जसको मनोरथ सदा सिद्ध छ, जो सदा सबैको कल्याण होस् भन्ने संकल्प राख्दछन्, आफ्ना भक्त र उपासकलाई सिद्धि (अणिमा महिमा गरिमा लघिमा प्राप्ति प्रकाश्य ईशित्व वशीत्व आदि अष्ट सिद्धि) प्रदान गर्दछन्, प्रभुमा मन लगाइ कर्म गर्ने (जप पूजा पाठ तर्पण हवन कीर्तन भजन आदि गर्ने) भक्तको सम्पूर्ण मनोकामना सिद्ध पूर्ण गरिदिन्छन् (हरिप्रसादाद् सकलं प्रपूर्णम्) ॥२७॥

वृषाही वृषभो विष्णुर्वृषपर्वा वृषोदरः ।
बर्धनो बर्धमानश्च विविक्तः श्रुतिसागरः ॥२८॥

सम्पूर्ण धर्मको उपभोग गर्ने, धर्ममार्गमा चल्नेलाई उत्तम फल दिने, (सत्य बोल्नु, दया गर्नु, सेवा औ त्याग धर्म हो) सबै तिर (भूर्भुवः स्वः मा) व्याप्त भएका अर्थात् जल स्थल नभ शून्य पदार्थ आदिमा जहाँ तहीं हरि छन् पुकार्न सक्नुपर्दछ, (फोरेर लौहस्तंभ भए प्रकट नृसिंह, प्रल्हाद भक्तलाई पारीदिए अचम्भ) लोकको कल्याणका लागि दुष्ट दैत्य दानवहरूको संहार गर्ने, धर्मकर्म द्वारा प्राप्त गर्न

सकिने (शरीर मन मस्तिष्क धर्मले पार्छ पावन, सबै छोडी गरौं नित्य हरिको गुण गायन) आफ्नो पेटमा सम्पूर्ण धर्म राख्ने, (हुँदा प्रलयको काल उन्कै उदरगर्तमा, पुग्छन् हुन समाविष्ट विश्व-ब्रह्माण्ड-साधना) सूक्ष्मतम रूपबाट महत्तम भै बढन सक्ने, भक्तहरूमा कर्मयोगको भावना बढाउने, वेदरूपी अथाह सागर तुल्य ।।२८।।

**सुभुजो दुर्धरो वाग्मी महेन्द्रो वसुदो वसुः ।**
**नैकरूपो वृहद्रूपः शिपिविष्टः प्रकाशनः ।।२९।।**

आजानुवाहु, घुँडांसम्म छुने हात भएका, कसैले पनि "हरि यस्ता छन्" भनी आँक्न न सक्ने, मधुरवाणि (बोली) भएका, (वाचाल वक्बकै गर्छन् वाग्मी बोल्छन् सुभाषित) इन्द्रादि देवताहरूका इन्द्र (श्रेष्ठ भएका), आफ्ना भक्तहरूलाई धर्मरूपी धन (वसु) दिने, स्वयं पनि अथाह धर्मधनका भण्डार भएका, अनेकरूप भएका, विराटस्वरूपधारी, ज्योतिस्वरूप भएर विश्वमा प्रकाशित हुने (अखण्डमण्डलाकारं व्याप्त येन चराचरम्) ।।२९।।

**ओजस्तेजो द्युतिधरः प्रकाशात्मा प्रतापनः ।**
**ऋद्धः स्पष्टाक्षरो मन्त्रश्चन्द्रांशुर्भास्करद्युतिः ।।३०।।**

ओज तेज द्युति (मन्द स्थूल र अत्युच्च प्रकाशगुणधारक) धारण गर्ने, जसको आत्मा सदा स्वयं प्रकाशित छ, (दिव्यदृष्टि गरी हेरे भेट्टिन्छन् तेजिला प्रभु) सहस्रांशु भएका सूर्यझैं तेजिला, पूजा पाठ जप तप यज्ञ आदिले भेट्टाइने गरी समृद्ध भएका, स्पष्ट अक्षर भएका, (सुगम सरल स्पष्टः श्रीहरि नामधारी) मन्त्रमय (ॐ नमो नारायणाय, ॐ नमो भगवते वासुदेवाय, ॐ देवो नारायणो हरिः आदि) चन्द्रमाको

जस्तो शीतल किरण भएका, सूर्यको जस्तो तेजिलो ज्योतिप्रकाश भएका, (जस्तो रूपपनि धर्छन् भक्तका लागि माधव ।।३०।।

**अमृतांशूद्भवो भानुः शशविन्दुः सुरेश्वरः।**
**औषधं जगतः सेतुः सत्यधर्मपराक्रमः ।।३१।।**

अमृतका अंशरूप भएका चन्द्रमालाई उत्पन्न गर्ने, (चन्द्रमा मनसो जातः– यजुर्वेद) सूर्यस्वरूप भएर सर्वत्र प्रकाशछर्ने, चन्द्रकिरण भैं आल्हाद छर्ने, सम्पूर्ण देवताका अधिपति, औषधिरूप भएका, (हरिको नाम जप्नाले छुट्छन् रोग सबै जसो) भवसिन्धुबाट जगतलाई पार उतार्ने पुलसमान भएका, सत्य र धर्मनै जसको पराक्रम छ ।।३१।।

**भूतभव्यभवन्नाथः पवनः पावनोऽनलः।**
**कामहा कामकृत्कान्तः कामः कामप्रदः प्रभुः ।।३२।।**

भूत भविष्य र वर्तमान तीनै कालका सर्ववेत्ता स्वामी, वायुका स्वरूप (जीवन रूपी प्राणवायुका सन्धाता हरि हुन्) जो सदा सर्वदा सर्वथा पवित्र छन्, (मनुष्यका कर्मरूपी मोह छुट्छन् सरासर, जिब्रोमा जसले राख्छ 'हरि' यो दुई अक्षर) उनै प्रभु अग्निस्वरूपपनि छन्, (जन्मजन्मान्तर महां अर्जेको पाप दुष्त्यज सबै कट्छन् माधवको नाम जप्दा, सदा भज) मनुष्यको मानसपटलमा ओतप्रोत भएर बसेका विषयादि कामवासनाहरू नाश गर्ने, फलेच्छा त्यागी निष्काम भावले भज्ने भक्तहरूको इच्छा परिपूर्ण गर्ने, अतिनै मनमोहक आकृति भएका, (लक्ष्मीकान्तं हरिं भजेत्) मुमुक्षु भक्तहरूलाई मोक्षत्त्व प्रदान गर्ने, सर्वेश्वर सर्वव्यापक र सामर्थ्यवान् भएर रहने ।।३२।।

**युगादिकृद्युगावर्तो नैकमायो महाशनः।**
**अदृश्योऽव्यक्तरूपश्च सहस्रजिदनन्तजित् ।।३३।।**

आदियुगको रचना गर्ने, (जलमय भवमा अण्ड भएर त्यसको गरिकन स्फोटन, पञ्चतत्त्व औ त्रिगुणी रूपमा गरे युग सम्वर्धन) स्वरचित त्यही युगलाई घुमाउने, (सत्य त्रेता द्वापर कलि यी समयबद्ध युग चार, उनकै इच्छामा क्रमबद्ध घुमीरहेछन् आज) अनेक प्रकारको मायामा विश्वलाई भुलाउने, अत्यन्त विशाल भोजन भएका (प्रलय कालमा सब ब्रह्माण्ड प्रभुकै उदरगत हुन्छन्) चर्मचक्षुद्वारा कसैलाई कदापि दृष्टिगोचर न हुने, अव्यक्त स्वरूप भएका (निर्गुण प्रभुको दर्शन गर्न त्रिगुणी पार भएर अन्तर्मनमा निस्पृह भाव राख्नैपर्दछ धेर) हजारौं दुष्टहरूलाई संहार गरी विजय प्राप्त गर्ने, जुन प्रभुको विजयको वर्णन गरेर साध्यै छैन, (जहाँ गए पनि जहाँ रहे पनि सुनिन्छ उनको जयघोष ।।३३।।

**इष्टोऽविशिष्टः शिष्टेष्टः शिखण्डी नहुषो वृषः ।**
**क्रोधहा क्रोधकृत्कर्ता विश्ववाहुमहीधर ।।३४।।**

सबका प्रिय र मनपरेका (हरि मेरा हुन् हरिको हूँ म ध्यान धरूं यहि नित्य अरू सारा हुन् नश्वर मिथ्या हरि हुन् शाश्वत सत्य) देवता, मनुष्यहरूको हृदयमा अवशिष्टरूपमा सर्वदा रहने, सत्य सनातन र अध्यात्ममार्गमा चल्ने व्यक्तिका प्यारा, (मन पराउने) मयूरपंख मुकुटमा धारण गर्ने, मायाद्वारा विश्व लाई घुमाउने, धर्मनै मूल कारण भएका, क्रोधलाई जितेका, दुष्टजन संहार गर्दामात्र क्रोध धारण गर्ने, विश्वब्रह्माण्डका कर्ता, समस्त संसार नै हात भएका, पृथ्वीलाईधारण गर्ने ।।३४।।

**अच्युतः प्रथितः प्राणः प्राणदो वासवानुजः ।**
**अपां निधिरधिष्ठानमप्रमत्तः प्रतिष्ठितः ।।३५।।**

कहिल्यैपनि च्युत न हुने, (च्युत ता केवल मानव हुन्छन् अच्युत हरि छन् नित्य) संसारभरि प्रख्यात भएका, सबको घटघटमा प्राणस्वरूप भै निवास गर्ने, साराजीवलाई प्राणरूपी अस्तित्व प्रदान गर्ने, इन्द्रका भाइ जलको अपार भण्डारमा (क्षीरसागरमा) निवास गर्ने, कहिल्यैपनि विचलित न हुने, विश्वब्रह्माण्ड नष्ट हुँदा पनि शेष रहने, (प्रतिष्ठा पाइरहने ।।३५।।

**स्कन्दः स्कन्दधरो धुर्यो वरदो वायुवाहनः ।**
**वासुदेवो बृहद्भानुरादिदेवः पुरन्दरः ।।३६।।**

धर्मस्वरूप र अमृत तत्त्वमय भएका, धर्मलाई रूचाउने, संसारको भार बोक्ने, (निहित छ प्रभुमानै विश्वको पूर्ण भार) इच्छानुसार वरदान दिने, (खोज्छन् दिन वर सबकन प्रभु ता सक्तैनौं लिन हामी, भक्तिभाव न गर्ने हामी पापभकारी थामी) वायुसमान बेगभएको गरूडलाई आफ्नो अति प्रिय वाहन बनाएका, वसुदेवका पुत्र भएका (द्वापरयुगका श्रीकृष्णको परिकल्पना) द्वादश सूर्यको समान प्रखर तेज भएका, सर्व प्रथम देवत्व रूप भएका (जलमय संसार छदा अण्डविष्फोटन भै उत्पन्न भएका) दैत्यका शहरहरू नाशगर्ने ।।३६।।

**अशोकस्तारणस्तारः शूरः शौरिर्जनेश्वरः ।**
**अनुकूलः शतावर्तः पद्मी पद्मनिभेक्षणः ।।**

कहिल्यैपनि कुनै प्रकारकोपनि शोक न लिने (शोकशून्य) भएका संसारबाट (पुनरपि जननं पुनरपि मरणं पुनरपि जननीजठरेशयनम् पीडाबाधादिक सन्तापं चतुराशीतिर्योनिर्भ्रमणम्, बाट) पार उतार्ने, महान शक्तिशाली, शूरका वंशमा उत्पन्न भएका (वसुदेवको कुललाई

शूरकुल भन्दछन्) सम्पूर्ण जन (लोक) का स्वामी, भक्तजनका लागि सदा अनुकूल रहने, शयकडौं घेरा भएको चक्रव्यूहस्वरूप भएका (योगी, भक्तहरूमात्र बुझ्दछन् चक्रव्यूह त्यो) चारबाहु मध्ये एक बाहुमा सहस्रदल कमल धारण गरेका, कमलजस्तो नेत्र भएका ।।३७।।

**पद्मनाभोऽरविन्दाक्षः पद्मगर्भः शरीरभृत् ।**
**महर्द्धिर्ऋद्धो वृद्धात्मा महाक्षो गरुडध्वजः ।।३८।।**

सृष्टिको प्रारम्भमा अण्डविष्फोटन भै जलमय विश्वबाट उत्पन्न हुँदा नाभिभागबाट कमल उत्पन्न गर्ने, (जहाँ ब्रह्मा बसेका छन्) कमलजस्तो नेत्र भएका शरीरको अन्तहृदमा कमल बीज धारण गरेका, स्वयं निर्गुण (त्रिगुणातीत) भएरपनि विश्वकल्याणको लागि प्राणधारी (मत्स्य कूर्म वराह नृसिंह हयग्रीवादि) शरीर धारण गर्ने, महान् महान् विभूतिहरूले सम्पन्न भएका, बृद्ध (पूर्ण परिपक्व र महान् अनुभवयुक्त) आत्मा भएका, विश्व ब्रह्माण्डभर दृष्टिगोचर गर्न सक्ने नेत्र भएका, (चर्मचक्षुले कहीं देख्दैनौ हामी श्रीहरिलाई महान ईश्वर हाँसीरहन्छन् हाम्रै सामु आई) रथको ध्वजामा गरूड भएका ।।३८।।

**अतुलः शरभो भीमः समयज्ञो हविर्हरिः ।**
**सर्वलक्षणलक्ष्यण्यो लक्ष्मीवान् समितिञ्जयः ।।३९।।**

जुन हरि संग कसैको पनि तुलना हुन सक्तैन, आत्मज्ञानीले मात्र बुझ्न र जान्न सक्ने निराकार र साकार स्वरूप भएका, भयावह रूप पनि यदा कदा धारण गर्ने, (भक्त प्रल्हादको रक्षा खातिर नृसिंह रूप धरी, हिरण्यकश्यप गरे संहार भीषण गर्जन गरी) समयलाई राम्ररी

जान्ने भएका (दिन्छन् भक्तहरूमा दुःख सुखपनि समयबुझी, तसर्थ हिम्मत हार्न हुँदैन दुःख परे पनि) हवन गरिने वस्तु स्वरूप भएका (ब्रह्मार्पणं ब्रह्म हविः) सबैको पापलाई हरण गर्ने, सम्पूर्णलक्षणहरूले युक्त भएका, (लक्षण बत्तीश कला चौंषट्ठी अष्टसिद्धि नवनिधिका, स्वामी उनै हुन् धनी उनै छन् सब नै गुणहरूका) सर्वगुणसम्पन्ना लक्ष्मी जसको हृदयमा सदा वास गरेकी छन्, जुनसुकै युद्धमा पनि जो विजय प्राप्त गर्दछन् ।।३९।।

**विक्षरो रोहितो मार्गो हेतुर्दामोदरः सहः ।**
**महीधरो महाभागो वेगवान मिताशनः ।।४०।।**

कहिल्यैपनि नाश न हुने, (झर्छन् पुण्य क्षीण हुँदा नर यै भवसिन्धुमा, क्षीरोदसागरस्थायी रहन्छन् प्रभु शेषमा) मत्स्यस्वरूप धारण गर्ने, सबै विश्वलाई पथप्रदर्शन गर्ने, उत्पत्ति स्थिति र लयका कारण भएका पेटमा दाम्लोको डाम भएका, (चकचक गर्दा यशोदामाले बाँधिन् दाम्लो ल्याई, भए प्रसिद्ध उदरडामभै दामोदर नाम कमाई) साह्रै नै सहनशील भएका, पृथ्वीलाई धारण गर्ने, (पृथ्वी त्वया धृता लोका देवीत्वं विष्णुना धृता) स्वेच्छाले नै विविध रूप धारण गर्ने, प्रचण्ड वेग भएका, (भक्तको लागि दौडन्छन् सुनी करूण कन्दन) जसको भोजन सीमित नै छैन, (प्रलय हुँदा जगको विश्वचराचर पुग्छन् हरिकै उदरगर्तमहाँ, कालरूप बनी निल्छन् सकल ब्रह्माण्ड नै प्रलयकालमहाँ ।।४०।।

**उद्भवः क्षोभणो देवः श्रीगर्भः परमेश्वरः ।**
**करणं कारणं कर्ता विकर्ता गहनो गुहः ।।४१।।**

उत्पत्तिका मुख्य कारण भएका, प्रकृति र पुरुष दुवै तत्त्वलाई आलोडन गरी क्षोभ (संचालन ) गर्ने, (प्रभुकै इच्छा जाग्रत वन्दा पञ्चतत्त्वमय लोक रचिन्छन्, त्यसकै मात्राबाट बनेको पुरुष र प्रकृति तत्त्व कहिन्छन्) देवस्वरूप भएका (एको देवः केशवो वा शिवो वा) विश्वको सम्पूर्ण वैभव गर्भमा (आफूभित्र) धारण गर्ने भएका नवधा भक्तिद्वारा प्राप्त हुने परमेश्वर निराकार र साकार स्वरूपका, विश्वको संरचनामा कर्ता करण र कारण स्वरूप भएका (उनकै रचना खटना हो यो क्रीडाभूमि विश्व, रचना पालन लय पनि गर्छन् उनी नै हर घडी स्वेष्ट) प्रभु यस्ता छन् भनेर कसैले पनि हम्मेशा जान्न सक्तैनन् उनी साह्रै नै गहन र गूढ छन् ।।४१।।

**व्यवसायो व्यवस्थानः संस्थानः स्थानदो ध्रुवः ।**
**परर्द्धिः परमः स्पष्टस्तुष्टः पुष्टः शुभेक्षणः ।।४२।।**

भक्त र सेवकहरूको लागि सदासर्वदा सेवनीय व्यवसाय भएका (एकै लक्ष्य लिई गर्दा सफलीभूत बन्दछन्, सेवा कर्म र व्यापार, प्रभुले दृष्टि राख्दछन्) त्रिलोककै मूल स्थान स्वरूप भएका, (समस्त लोक नै गर्छन् यज्ञ दान र अर्चना, इच्छा राखेर अक्षय्य वैकुण्ठ प्राप्ति कामना) आफ्नो अनन्य भक्त, सेवक र साधकको लागि त्यही स्थान (अक्षय्य वैकुण्ठवास) प्रदान गर्ने भएका, शाश्वत सत्य र अनश्वर भएका, सर्वैश्वर्य र गुणसम्पन्न भएका भक्तहरूका लागि सदा पथप्रदर्शक भएर इच्छित फल दिने, प्रसन्नरहने, छर्लङ्ग भैदिने, भक्तहरूको सुकर्म प्रति सदा सर्वदा शुभदृष्टि राख्ने ।।४२।।

**रामो विरामो विरजो मार्गो नेयो नयोऽनयः।**
**वीरो शक्तिमतां श्रेष्ठो धर्मो धर्मविदुत्तमः ॥४३॥**

जुन ईश्वरमा योगीजन सदा सर्वदा रमाई ध्यानमग्न भैरहन्छन्, (रमन्ते योगिनो यस्मिन्) जसलाई प्राप्त गरेपछि आवागमनबाट विश्राम प्राप्त हुन्छ, (जन्म मरण चौराशी लाख जुनिको चक्कर काट्ने, विकार सारा दूर भएर शाश्वती मोक्षमा पुग्ने) तमोगुण र रजोगुण रहित भै केवल सत्वगुणमा निहित रहने, योगीजनहरूले अध्यात्मचिन्त द्वारा अनुसरण गरिने मार्ग स्वरूप भएका, मुमुक्षु योगी मुनिजनहरूलाई अनन्त मोक्षपद प्रदान गरी सायुज्य सामीप्य सारूप्यता प्रदान गर्ने, जसको विकल्प नै छैन, (हरि छन् एक हरिपद एक खोजौं ध्यान गरेर) उनी भन्दा महान् वीर अरू कोही छैनन्, शक्तिमान्हरूमा उनीनै सर्वश्रेष्ठ छन्, जो शाश्वत धर्म स्वरूप छन्, उत्तम धर्म (सत्य अहिंसा दया विवेक परोपकार आदि) का ज्ञाता पनि उनै प्रभु छन् ॥४३॥

**वैकुण्ठः पुरुषः प्राणः प्राणदः प्रणवः पृथुः।**
**हिरण्यगर्भः शत्रुघ्नो व्याप्तो वायुरधोक्षजः ॥४४॥**

उत्तम र अक्षय्य मोक्षगति प्रदान गर्ने, सर्वप्रथम र उत्तम पुरुष सम्पूर्ण प्राणीका प्राणस्वरूप (प्राणीहरूका प्राण भएर हृदयै भित्र वसी, उनीनै बोल्छन् उनीनै गर्छन् गर्ने कर्म जति) त्रिरूपमय ॐकार स्वरूप भएका संपूर्ण सृष्टिका मूलाधार स्वरूप भएका, जीवनको (सृष्टिस्थिति र प्रलयको) आधारतत्त्व (सुवर्णमय तत्त्व) लाई आफैंमा आत्मसात् गर्ने भएका, सम्पूर्ण शत्रुहरूको नाश गर्ने भएका, सर्वत्र व्याप्त भएका, प्राणीमात्रको प्राणवायुस्वरूप भएका त्रिभुवन (स्वर्ग मर्त्य पाताल) लाई जसले आफ्नो पाउले थिचेर राखेकोछ ॥४४॥

**ऋतुः सुदर्शनः कालः परमेष्ठी परिग्रहः।**
**उग्रः सम्वत्सरो दक्षो विश्रामो विश्वदक्षिणः ॥४५॥**

ऋतु (परिवर्तनशील) स्वरूप भएका, सदा हेरी रहूँ जस्तो लाग्ने, (आँखा झिम्मै न पारी हेरीरहूँ झै मोहिनी रूप, दर्शन पाई प्रभुको हुन्नन् तृप्त नेत्र अनूप) कालस्वरूप भएका, अवर्णनीय महिमासम्पन्न भएका, शरणागतलाई शरण दिने भएका, (शरणागत भक्त वत्सल र दयावान् अति छन् रमाधव) कहिलेकाहीं उग्ररूप पनि धारण गर्ने, सम्वत्सर स्वरूप भएका विश्व संरचना गर्न अति नै निपुण भएका, चराचर लोकको अन्तिम विश्रामस्थल भएका, (जहाँ पुगेपछि फर्कन पर्ने झन्झट हुन्नकदापि, हरिगुणगायन गर्ने भाव जागृत हुन्छ सदापि) विश्वको लागि दक्षिणा स्वरूप भएका, (पूजा यज्ञ र दान आदिमा दक्षिणा अति आवश्यक तत्त्व हुन्छ) ॥४५॥

**विस्तारः स्थावरस्थाणुः प्रमाणं वीजमव्ययम्।**
**अर्थोऽनर्थः महाकोशो महाभोगो महाधनः ॥४६॥**

जगत् चराचरलाई विस्तार गर्ने, कहिल्यै घटवढ न हुने यथावत् स्थिति भएका, प्रमाणस्वरूप भएका (भाक्नु परेमा धर्म उनैकन राख्छन् मानव साक्षी) कहिल्यै नाश न हुने वीज (वृक्ष) स्वरूप भएका, (ऊर्ध्वमूलधः शाखमश्वस्त्थं प्राहुरव्ययम्) सवै नश्वर भएपनि शेष रहने एकमात्र प्रयोजन रूप भएका, विश्वब्रह्माण्डकै अनन्त (भोगेरै नसकिने) अक्षय (कहिल्यै न घट्ने) विपुलधनभण्डारको कोष (ढुकुटी) समान भएका ॥४६॥

**अनिर्विण्णः स्थविष्ठोऽभूर्धर्मयूपो महामखः।**
**नक्षत्रनेमिर्नक्षत्री क्षमः क्षामः समीहनः ॥४७॥**

कहिल्यैपनि विक्षिप्त वा खिन्न न हुने, (दोषत्रुटीपूर्ण हुदैन कर्म, जस्बाट त्यो हुन्न कदापि खिन्न) साह्रै विशालरूप धारण गर्ने, जन्ममरणादि चक्रमा कहिल्यै न पर्ने, धर्मको मौलोस्वरूप भएका, महान् यज्ञरूप, (अश्वमेध, राजसूय, विश्वजित आदि) खगोलचक्र (तारा चन्द्र सूर्य मंगल नक्षत्र बालखिल्य सप्तर्षि ध्रुव आदि) का आधार स्तम्भ स्वरूप भएका, चन्द्रमा जस्तै शीतल र शान्त स्वरूप भएका, सर्वसामर्थ्य सम्पन्न भएका, कुनै पनि विकार रहित भएका, आफ्नो नानाविध लीलाले चराचर जगतलाई मोहित तुल्याउने ।।४७।।

**यज्ञः इज्यो महेज्यश्च क्रतुः सत्रं सतां गतिः ।**
**सर्वदर्शी विमुक्तात्मा सर्वज्ञो ज्ञानमुत्तमम् ।।४८।।**

यज्ञस्वरूप भएका, यज्ञमा प्रयोग हुने पदार्थस्वरूप भएका समस्त विश्वद्वारा सदा सर्वदा पूज्य भएका, वेद द्वारा प्रतिपादित- कर्महरूको बोध भएका, सज्जन ज्ञानी कर्तव्यनिष्ठहरूलाई उत्तम गति दिने, सबैतिर दृष्टि दिने, (हात्तीदेखि भुसुना सम्म सबमा छन् हरि व्याप्त, अन्तर्मनको भाव बुझेर दिन्छन् फलपनि आप्त) उनको आत्मालाई कसैले पनि बाँध्न सक्तैनन्, मनुष्यहरूको पाप र पुण्यको सम्पूर्ण क्रियाकलाप उनी जान्दछन् (कर्मानुसार फलका दाता निष्पक्ष छन्, हरि भेदभाव कुनै छैन उनी भित्र तृणांकुरी) उनी सबैको मनको भावना बुझ्दछन्, उनीभित्र उत्तम ज्ञानको भण्डार छ, (रिझाएमा प्राप्त हुन्छ ज्ञान भण्डार त्यो स्वयम्, मनुष्यधर्म संझेर त्याग्नुपर्छ सबै अहम्) ।।४८।।

**सुव्रतः सुमुखः सूक्ष्मः सुघोषः सुखदः सुहृत् ।**
**मनोहरो जितक्रोधो वीरबाहुर्विदारणः ।।४९।।**

उत्तम व्रत (इच्छा, कर्म, क्रियाकलाप, गति, ज्ञान र कर्तव्य) भएका, सदा हेरी रहूँ जस्तो लाग्ने शान्त र सौम्य अनुहार भएका, अति नै सूक्ष्मरूप (इन्द्रियादिद्वारा अगोचर) भएका, मधुरतम शब्द (वाणी) भएका, भक्त योगी मुनि धर्म परायण मोक्षकामी आदिलाई सुख (उत्तम गति) दिने, सबैका मित्र समान भएका, (कोही हुँदैनन् हरिका लागि शत्रु विवेक विहीन, सम छन् उनका लागि सदैव राजा हुन् वा दीन) उनी साह्रै मनोहर छन् (मनका विचलित विकृत भाव एक एक हरिदिन्छन्, आफ्नो शरण परेका सबमा अभीष्ट फल हरि दिन्छन्) क्रोधलाई जितेका छन् (लेशमात्रपनि हुन्न हरिमा क्रोध औ भय, परौं शरणमा उन्को भक्तिपूर्वक निर्भय) पराक्रमपूर्ण आजानुबाहु भएका, दुष्टहरू (धर्म र ईश्वरका विरोधी नास्तिक) लाई नाश गर्ने ।।४९।।

**स्वापनः स्ववशो व्यापी नैकात्मा नैककर्मकृत् ।**
**वत्सरो वत्सलो वत्सी रत्नगर्भो धनेश्वरः ।।५०।।**

अज्ञानी अकर्मण्य हठधर्मी नास्तिक विषयलम्पट आदि प्राणी-लाई मोहमायाजालमा सुताउने (भुलाउने), स्वेच्छानुसार स्वयं आफ्नो वशमा रहने, विश्वभर व्याप्त भएका (जलमा स्थलमा नभमा कणमा सबमा छन् हरि व्याप्त) अनेक आत्मा भएका, (उनी आफू ता एक भएपनि सबका आत्मा बस्छन्) उनबांट सम्पूर्ण कार्य परिपूर्ण हुन्छन्, (एउटै कार्यमा मात्र हुँदैनन् उनी सीमित, सृष्टिस्थिति र संहार आदि गर्छन् असीमित) जसको आश्रय पाएर जगत् चराचर स्थिर छन्, जो सबका अति प्यारा छन्, वाच्छाहरूका रक्षक, (ब्रह्माजीले वाच्छाहरूको

गर्दा हरण गोकुलमा, सारा बाच्छा बनी स्वयं नै पस्नुभयो गो-कुलमा) रत्नहरूका खानी भएको क्षीरसागरमा शयन गर्ने, विश्वभरके विपुल वैभवका स्वामी, (अपारधनकी देवी सिन्धुजा जसकी छन् वामाङ्गी, न हुन् ती हरि किन धनका पति धन प्रदाका सङ्गी) यहाँ चलायमान धनको भन्दा भक्तिधनको व्याख्या गर्नु श्रेयस्कर होला जस्तो लाग्छ) ।।५०।।

**धर्मगुब्धर्मकृद्धर्मी सदसत्क्षरमक्षरम् ।**
**अविज्ञाता सहस्त्रांशुर्विधाता कृतलक्षणः ।।५१।।**

धर्म (वैदिक सनातनी र आध्यात्मिक) को रक्षा गर्ने, धर्मको प्रवर्धन गर्ने, विश्वभर धर्मको स्थापना गर्ने, (धर्म संस्थापनार्थाय संभवामि युगे युगे) कहिले स्थूलरूप (सगुण) र कहिले सूक्ष्मरूप (निर्गुण निराकार) भएर रहने, कहिल्यैपनि नाश न हुने, (प्रलय हुँदापनि शेष रहन्छन् जलमा अण्ड स्वरूप) चर्मचक्षुले दृष्टिगोचर न हुने, हजार किरण भएका, प्राणीहरूको घटघटमा बसी अस्तित्व प्रदान गर्ने, सम्पूर्ण लक्षणले सम्पन्न भएका ।।५१।।

**गभस्तिनेमिः सत्वस्थः सिंहो भूतमहेश्वरः ।**
**आदिदेवो महादेवो देवेशो देवभृद् गुरूः ।।५२।।**

सूर्यको जस्तो रूप धारण गरी विश्व ब्रह्माण्डको भ्रमण गर्ने, सत्व गुणमा सदा स्थिर रहने, (सत्व गुण प्रधान भएका) सिंह समान (शक्तिशाली) भएका, भूतहरू (प्राणीमात्र) का स्वामी, सृष्टिको रचना भन्दापनि पहिलेका देव (आदिदेव) भएका, तेत्तीस कोटी देवताका पालन र संरक्षण गर्ने श्रेष्ठ देवता, देवताहरूका स्वामी, देवताहरूका राजा (देवेन्द्रका) पनि गुरू (पथ प्रदर्शक) भएका ।।५२।।

**उत्तरो गोपतिर्गोप्ता ज्ञानगम्यः पुरातनः।**
**शरीरभूतभृद्भोक्ता कपीन्द्रो भूरिदक्षिणः ।।५३।।**

प्राणीहरूलाई संसाररूपीसमुद्र (काम क्रोध लोभ मोह आदि चक्रव्यूह) बाट पार लगाउने, (यही सहस्रनामको प्रथम श्लोक हेर्नें) पृथ्वीका पति (पालन गर्ने), जगत्‌लाई पालन गर्ने, आध्यात्मिक ज्ञान द्वारा मात्र प्राप्त गर्न (भेट्टाउन) सकिने अतिनै पुराना (आदिदेव हुँदा विष्णु पुरातन हुने भए) जन्म र मृत्यु भन्दा पर भएर पनि भक्तहरूको संरक्षणका लागि शरीर धारी भएर अवतार लिने, संसारलाई उपभोग गर्ने, (हाम्रा संगमा हिंडछन् प्रभु ती अनन्त आत्म बनी बोल्छन् खान्छन् सुन्छन् गर्छन् सारा कार्य उनी) बाँदर जातिका राजा सुग्रीव स्वरूप भएका, मर्यादाका पालक स्वयं मर्यादा स्वरूप भएका ।।५३।।

**सोमपोऽमृतपः सोमः पुरूजित्पुरुसत्तमः।**
**नयो जयः सत्यसन्धो दाशार्हः सात्वतां पतिः ।।५४।।**

सोमलताको रसपान गर्ने, अमृतपान गर्ने, सम्पूर्ण औषधी स्वरूप भएर जगलाई आधि व्याधि बाट उतार्ने, (वैद्यो नारायणो हरिः) संसारलाई जिती आफ्नो वशमा राख्ने, विश्वरूप धारण गर्ने, न्याय र नीतिका उत्तम ज्ञाता, सदा सर्वदा जय प्राप्त गर्ने, (जय र विजय जस्का मुख्य छन् द्वारपाल) सदा सत्यलाई सन्धान गर्ने, (सत्यप्रतिज्ञ भएका) तन मन धन अर्पण गरी सेवा गर्न योग्य भएका, (शरणागत दीनार्तपरिपालक छन् हरि, परौं शरणमा उन्को दिन्छन् मोक्ष र सद्गति) मन्त्र तन्त्र पूजा पाठ यज्ञ यागादिका सर्वश्रेष्ठ स्वामी स्वरूप ।।५४।।

**जीवो विनयिता साक्षी मुकुन्दोऽमित्तविक्रमः।**
**अम्भोनिधिरन्तरात्मा महोदधिशयोऽन्तकः ।।५५।।**

प्राणीमात्रको शरीरमा जीव (प्राण) रूप भएर बस्ने विनम्रताले युक्त भएका, (हरिमा हुन्नंन् ईर्ष्या द्वेष अहंकार रतिमात्र, जो छन् अतिनै दयानिधान भक्त प्रेमका पात्र) विश्वचराचरको पापपुण्यादि कर्मका साक्षी भएका, आफ्ना शरणमा परेका भक्तलाई शाश्वती मुक्ति दिने भएका, (योगक्षेमं वहाम्यहम्) अतिनै पराक्रमी भएका, सम्पूर्ण संसार देव नरादि जसमा अन्त्यमा लीन हुन पुग्दछन्, अनन्त कोटी ब्रह्माण्डकै आत्मास्वरूप भएका, (अनन्त कोटी ब्रह्माण्डनायक गौब्राह्मण प्रतिपालक दीनानाथ दयानिधान करूणा सागर भगवान्) अपारजलभण्डार भएको क्षीरसागरमा शयन (वास) गर्ने, प्रलयकालमा चराचर जगतको अन्त्य गरी आफूभित्रै लीन गराउने ॥५५॥

**अजो महार्हः स्वाभाव्यो जितामित्रः प्रमोदनः ।**
**आनन्दो नन्दनो नन्दः सत्यधर्मा त्रिविक्रमः ॥५६॥**

नारीको गर्भबाट साल नालयुक्त भै न जन्मने (स्वयं प्रकट हुने) महान् प्रकारले पूजा गर्न योग्य भएका, (त्यागेर वित्तशाठ्य अर्पेर भक्तिभाव, पूजा गरेर डाक्दा पर्ने महान् प्रभाव) स्वभावले नै आनन्द स्वरूप भएका, (सर्वं त्यक्त्वा हरिं भजेत्) बाहिरी र भित्री (आधि व्याधि र पीडादि बाहिरी शत्रु हुन् सब, काम क्रोध स्पृहा ईर्ष्या भित्रका शत्रु बाधक) सबै प्रकारका शत्रुलाई जित्ने, योगी र भक्तजनलाई आनन्द दिने, स्वयं अमित आनन्द स्वरूप सबैलाई प्रसन्न राख्ने, सत्य स्नेह र ज्ञान स्वरूप, सत्यनै धर्म ठान्ने, तीनै लोकलाई तीन पाउद्वारा नाप्ने, (राजा वलीसंग मागे प्रभुले तीन पाउको भूमि, विराटरूप भै तीन पाउले नापे त्रिभुवन भूमि ॥५६॥

**महर्षिः कपिलाचार्यः कृतज्ञो मेदिनीपतिः।**
**त्रिपदस्त्रिदशाध्यक्ष्यो महाशृंगः कृतान्तकृत् ॥५७॥**

महर्षि कपिलाचार्यको अवतार धारण गरी माता देवहूतिलाई दिव्यज्ञान प्रदान गर्ने, भक्तद्वारा गरिएको शाश्वती भक्तिलाई बुझ्ने समस्त भूमण्डलका पति, तीन पाउले त्रिलोक ढाक्ने, (माथिको श्लोकमा उल्लेख भएको छ) जाग्रत् स्वप्न र सुषुप्ति तीनै अवस्थाका अधिष्ठाता, ठूलो सिङ भएका, (मत्स्यावतार पहिलो लिंदा श्रृंगी थिए उनी, त्यसैमा मनुले बाँधे आफ्नो नौका प्रतारणी) सारा संसारलाई संहार गरी स्वयं भित्र लीन गराउने ॥५७॥

**महावराहो गोविन्दः सुषेणः कनकांगदी।**
**गुह्यो गभीरो गहनो गुप्तश्चक्रगदाधरः ॥५८॥**

महावराह रूप धारण गर्ने, (हिरण्याक्षले पृथिवीलाई सिन्धु भित्र डुबाई, दिंदा दुःख हरि वराह भै रिपुको दलन गरे। ॐ जय जगदीश हरे) इन्द्रियादि विकारलाई जित्ने, अजेय त्रिगुणात्मक नारायणी सेना भएका, चारै बाहुमा सुवर्णमय बाजु धारण गरेका साह्रै नै गुह्य भएका, (ध्यानी ज्ञानी योगी मुनिजन कर्मयोगी तपस्वी, मात्रै भेटछन् हरि पदलाई कर्म गरेर यशस्वी) अथाह सागर झैं गहीरो भएका, (प्रभु अनन्त छन् महिमा उनको अझै अपार अनन्त, भित्र भित्र डुबी खोजे मात्र भेटिन्छन् ती सुखान्त) मन वचन इन्द्रियादि अभ्यर्थनबाट प्राप्त गर्न न सकिने, सुदर्शन चक्र र कौमोदकी गदा धारण गर्ने ॥५८॥

**वेधाः स्वांगोऽजितः कृष्णो दृढः संकर्षणोऽच्युतः।**
**वरूणो वारूणो वृक्षः पुष्कराक्षो महामनाः ॥५९॥**

ब्रह्मस्वरूप भएका, स्वयं नै आफ्नो कारण भएका, कसैले पनि जित्न न सक्ने, कृष्ण स्वरूप (दशावतार मध्येका आठौं ती अवतार हुन्) आफ्नो कर्मनिष्ठामा सदा दृढ सामर्थ्यवान्, प्रलयकालमा सम्पूर्ण चराचर जगतलाई आफूभित्रै समाहित गर्ने, कहिल्यैपनि च्युत न हुने, जलाधिपति वरूणस्वरूप वशिष्ठादि मन्त्रवेत्ता शास्त्रज्ञ सप्तर्षिस्वरूप, वृक्षसमान स्थिर रहने, कमल जस्तो नेत्र भएका, उदार र विशाल हृदय भएका ॥५९॥

**भगवान् भगहाऽनन्दी वनमाली हलायुधः।**
**आदित्यो ज्योतिरादित्यः सहिष्णुगतिसत्तमः ॥६०॥**

सर्वगुण सर्वैश्वर्य र सर्वसमृद्धि सम्पन्न भएका, ऐश्वर्य प्रतिको तृष्णा र मोहलाई नाशगर्ने, सदा रमाएर बस्ने, वनमाली (कहिल्यै पनि न ओइलाउने कमलको माला पहिरने) हलो अस्त्र भएका (भगवान को विविध अस्त्रमध्ये हलोपनि एक हो) अदितिका पुत्र भएका, अनन्त र अमिट ज्योतिस्वरूप भएका, वामनरूप धारण गर्ने, उग्र तातो र असह्य चीशोपनि सहन गर्न सक्ने, उत्तम गति भएका, (उत्तम गतिका हरिले दिन्छन् त्यस्तै नै गति सबमा) ॥६०॥

**सुधन्वाऽखण्डपरशुर्दारूणो द्रविणप्रदः।**
**दिविस्पृक्सर्वदृक्व्यासो वाचस्पतिरयोनिजः ॥६१॥**

अतिशक्तिशाली (शार्ङ्गनामक) धनुष धारण गर्ने, जसको बंचरो कहिल्यै पनि कुण्ठित र निष्फल हुँदैन, (परशुराम अवतारका बेलाको कल्पना) यदा कदा कठोर रूपपनि धारण गर्ने, विद्याधन ज्ञानधन मोक्षधन आदि कहिल्यै पनि न रित्तिने धन प्रदान गर्ने, स्वर्ग-लाई छुन् सक्ने, चारैतिर दृष्टि पुऱ्याउन सक्ने, वेदव्यासस्वरूप भएका, विद्याको

खानी भएकी सरस्वतीस्वरूप भएका, कुनैपनि योनिबाट न जन्मने ब्रह्मस्वरूप भएका ।।६१।।

**त्रिसामा सामगः साम निर्वाणं भेषजं भिषक् ।**
**सन्यासकृन्छमः शान्तो निष्ठा शान्तिः परायणः ।।६२।।**

तीन वेद (ऋग्वेद यजुर्वेद र अथर्ववेद) ले कर्मकाण्ड, उपासना र भक्ति रूपले स्तुति गरिने सामवेद द्वारा संगीत रूपमा गान गरिने, स्वयं पनि सामवेद स्वरूप भएका, परब्रह्म पूर्णचैतन्यस्वरूप, वैद्य तथा औषधिस्वरूप, (वैद्यो नारायणो हरिः) संन्यासलाई ज्ञानको परमसाधन मात्ने, विषयसुखलाई तुच्छ ठान्ने, शान्तस्वभाव भएका, (शान्ताकारं भुजगशयनं) परमनिष्ठावान्, शान्तिका लागि सदा अग्रगामी हुने ।।६२।।

**शुभाङ्गः शान्तिदः स्रष्टा कुमुदः कुवलेशयः ।**
**गोहितो गोपतिर्गोप्ता वृषभाक्षो वृषप्रियः ।।६३।।**

अति सुन्दर अंग भएका, सर्वत्र शान्ति छर्ने, सृष्टिको रचना गर्ने पृथ्वीलाई सदा आनन्द दिने, (बनाई पृथिवीलाई उर्वरा शस्यशलिनी) जलमा (क्षीरसागरमा) शयन गर्ने, (नारायण रह्यो नाम सुत्नाले जलमा उनी) गाईको हित गर्ने, गाईका पति वृषभ (धर्म) स्वरूप, गाई र ब्राह्मणको रक्षा गर्ने, (नमो ब्रह्मण्यदेवाय गोब्राह्मण हिताय च) समस्त मनोकामना पूर्ण गरिदिने, धर्मलाई अतिनै मन पराउने ।।६३ ।।

**अनिर्वर्ती निवृत्तात्मा संक्षेप्ता क्षेमकृच्छिवः ।**
**श्रीवत्सवक्षाः श्रीवासः श्रीपतिः श्रीमतांवरः ।।६४।।**

देवताहरूको रक्षाका लागि दानवादि संगको युद्धबाट विश्राम न पाउने, विषयादि विकारबाट जसको आत्मा धेरै टाढा छ, सांसारिक

प्रपञ्चबाट टाढा रही ईश्वर चिन्तनमा संलग्न रहन प्रवृत्त गराउने, जगको कल्याण गरी सबलाई पापादि कर्मबाट निवृत्त गराउने, छातीमा श्रीवत्स (भृगुपदचिन्ह) धारण गरेका, वामभागमा धनकी देवी लक्ष्मीलाई स्थान दिएका सिन्धुजा लक्ष्मीका परमप्रिय स्वामी भएका, (वैकुण्ठाधिपते चराचरपते लक्ष्मीपते पाहि माम्) ब्रह्मज्ञानीहरूमा श्रेष्ठ भएका ।।६४।।

**श्रीदः श्रीशः श्रीनिवासः श्रीनिधिः श्रीविभावनः ।**
**श्रीधरः श्रीकरः श्रेयः श्रीमान्लोकत्रयाश्रयः ।।६५।।**

अतुलवैभव प्रदान गर्ने, लक्ष्मीका पति, लक्ष्मीको जन्मथलो क्षीरसागरमा शेषशैय्यामाथि निवास गर्ने, ऐश्वर्यको विपुल भण्डार भएका, (मानवजीवनको वर्चस्व श्रीनिधि प्रभुकन भेटी, जीवन नौका पार तार्नु हो आवगमन दुख मेटी) ज्ञान र विवेकरूपी धन प्रदान गर्ने, लक्ष्मीलाई धारण (स्वीकार) गर्ने, (सागरमन्थन हुँदा निस्किइन् सिन्धुपुत्री श्रीलक्ष्मी, श्रीहरिले स्वीकार गर्नुभो उनलाई वामाङ्गी) आफ्ना भक्तहरूलाई वैभव सम्पन्न बनाउने, सबको कल्याणको कामना गर्ने, लक्ष्मीले युक्त भएका, तीनै लोकका आश्रय (आधारस्वरूप भएका ।।६५।।

**स्वक्षः स्वंगः शतानन्दो नन्दिर्ज्योतिर्गणेश्वरः ।**
**विजितात्मा विधेयात्मा सत्कीर्तिश्छिन्नसंशयः ।।६६।।**

अति सुन्दर नेत्र (आँखा) भएका मनोहर अंग भएका अनगिन्ति आनन्दका केन्द्रबिन्दु भएका, आनन्द मै रमाईरहने, ज्योतिर्मय परमानन्दस्वरूप, गणहरूका अधिपति, आत्मा (मन वचन र कर्म)

लाई जितेका, सांसारिक विधि विधानादि प्रपञ्चमय जालो देखि परतर आत्मा भएका, विश्व ब्रह्माण्ड भरीनै उत्तम कीर्ति व्याप्त पारेका, कुनै प्रकारको पनि संशय न भएका, (सर्वगुणसम्पन्न) ।।६६।।

**उदीर्णः सर्वतश्चक्षुरनीशः शाश्वतः स्थिरः।**
**भूशयो भूषणो भूतिर्विशोकः शोकनाशनः ।।६७।।**

सबैद्वारा गुणगान गरिने, सबैतिर दृष्टि पुऱ्याउने, जसका अधीश्वर कोही पनि छैनन्, (सर्वसामर्थ्य सर्वज्ञ उनै छन् सर्वव्यापक, उनी विना छैन कोही भवसागरतारक) जो सदा नित्य (प्रलयकालमा पनि) सत्य र शाश्वत भै रहीहन्छन्, जो भूमिमा शयन गर्दछन्, जसको विभूति (अस्तित्व र वर्चस्व) अति सुन्दर छ, जो सदा सर्वदा शोकरहित छन्, अरूको शोक पनि नाश गर्दछन् ।।६७।।

**अर्चिष्मानर्चितः कुम्भो विशुद्धात्मा विशोधनः।**
**अनिरुद्धोऽप्रतिरथः प्रद्युम्नोऽमितविक्रमः ।।६८।।**

अति तेजस्वी, (ज्ञानी योगी भक्तजन उनको प्रखर तेज त्यो, सक्छन् सहन औ हेर्न, दुष्टलाई असह्य त्यो) विश्व चराचर द्वारा सदा पूजित, जलपूर्ण कुम्भ (घड़ा) झैं शान्तिप्रद तथा शुभकारक, सत्व रज र तम तीनै गुण भन्दा पर भै (त्रिगुणातीत) भै विशुद्ध आत्मा भएका, कुनैपनि पापादिले छुन न सक्ने, जसको कुनै पनि शत्रु छैनन्, (षट् शत्रु काम क्रोधादि हुन्नन् उन्का कदाचन) उत्तम उत्तम द्रव्य (पदार्थ) ले सम्पन्न भएका, जसको यति नै पराक्रम छ भनी कसैले पनि आँक्न सक्तैन ।।६८।।

**कालनेमिनीहा वीरः शौरि शूरजनेश्वरः।**
**त्रिलोकात्मा त्रिलोकेशः केशवः केशिहा हरिः ।।६९।।**

कालनेमिलाई संहार गर्ने, शत्रुलाई नाश गर्ने महावीर, शूरका कुलमा जन्म लिएका, पराक्रमी जनलाई साह्रै मन पराउने र त्यस्ताका स्वामी पनि भएका, तीनै लोकका आत्मास्वरूप (उनी नै छन् पूजनीय सेवनीय र वन्दित, त्रिलोकभरिनै नित्य सबका मनमा स्थित) तीनै लोकका समादरणीय ईश्वर, जलमा शयन गर्ने, केशीनामक दैत्यको विनाश गर्ने, सबका मनभित्र प्रवेश गरी प्राणीमात्रको पाप हर्ने श्रीहरि ।।६९।।

**कामदेवः कामपालः कामी कान्तः कृतागमः ।**
**अनिर्देश्यवपुर्विष्णुर्वीरो ऽनन्तो धनञ्जयः ।।७०।।**

धर्म र कर्मयोगका अनुयायीलाई अभीष्ट फल प्रदान गर्ने, (यं यं कामयते कामं तं तं प्राप्नोति निश्चितम्) चाहिन्छ भक्ति केवल दिन्छन् प्रभु मीठो फल, तसर्थ भक्तिगर्नमा हुनू सदैव निश्चल) भक्तको मनोकामना फलीभूत पार्न सतत प्रयत्नशील रहने, अति सुन्दर रूप भएका, (सदा हेरीरहूँ जस्तो लाग्ने मोहनी रूप त्यो, आँखा झिम्मै न पारेर सर्वदा सर्वथा अहो!) श्रुति (वेद) स्मृति (मनुस्मृति) पुराण (स्कन्द र पद्मपुराण आदिका निर्माता (ज्ञाता) जसको शरीरको कुनै कल्पना नै गर्न सकिन्न, त्यस्ता निराकार, सर्वत्र व्यापक भएका, (जलमा थलमा रजका कणमा तरूका पातहरूमा, हरि छन् व्याप्त ज्ञान चक्षुले हेरौं त्यो महिमा) परमवीर (सर्वश्रेष्ठ), जसको कतै र कहीं पनि अन्त नै छैन, (गणना गर्दा एक र दशमा कहिले आदि त अन्त, यसरी दुइतिर नै व्याप्त छन् हरि आदि र अन्त) गाण्डीव धनुर्धारी अर्जुनस्वरूप (पाण्डवानां धनञ्जयः) ।।७०।।

**ब्रह्मण्यो ब्रह्मकृद् ब्रह्मा ब्रह्म ब्रह्मविवर्धनः ।**
**ब्रह्मविद् ब्राह्मणो ब्रह्मी ब्रह्मज्ञो ब्राह्मणप्रियः ॥७१॥**

त्याग तपस्या सत्य धर्मादिका ज्ञाता, ब्रह्मतत्त्वस्वरूप चारैवेदका निर्माता, सृष्टिलाई साकार पार्ने ब्रह्मस्वरूप, ब्रह्म (आध्यात्मिक ज्ञानको प्रतिरूप) स्वरूप, आध्यात्मिक ज्ञान द्वारा विश्वलाई सत्यको मार्ग (सर्वजनहित र सर्वजनसुख) देखाउने, वेदको तथ्य र सत्य (ईशावास्यमिदं सर्वं जगत्) जान्ने, ब्राह्मणहरूको गन्तव्य पथ वेद नै हो भनी व्याख्या गर्ने, ब्रह्मरूप (हरिः ॐ तत्सत्) धारण गर्ने, ब्रह्म (सच्चिदानन्द) जान्ने, ब्राह्मणवर्गलाई साह्रै मन पराउने, (नमो ब्रह्मण्यदेवाय गोब्राह्मणहिताय च) ॥७१॥

**महाक्रमो महाकर्मा महातेजा महोरगः ।**
**महाक्रतुर्महायज्वा महायज्ञो महाहविः ॥७२॥**

सृष्टि स्थिति संहारादि कार्य समयको क्रम अनुसारमात्र गर्ने, महान् र आश्चर्यजनक काम पनि गर्ने, (भक्तहरूको दुःखनिवारण गर्ना खातिर प्रभुले, मत्स्य कूर्म वराह नृसिंह आदिक रूप धरे, ॐ जय जगदीश हरे) उग्र तेज भएका, (कोटी सूर्यसम तेज धरेर सुकाउँछन् जग सारा, भै साम्वर्तक मेघ उनीनै गर्छन् वृष्टि जलधारा) महान् सर्पस्वरूप, (हजार फणका स्वामी शेषनाग स्वरूप भै, शिरमा बोक्तछन् भार पृथ्वीको उनीनै सबै) महान् प्रसिद्ध र अतुलफलदायी यज्ञ (अश्वमेध राजसूय विश्वजित आदि) स्वरूप भएका, ऋषिमुनिहरू र सम्राट्हरूलाई ठूला ठूला यज्ञहरू गर्न प्रेरणा जगाउने, स्वयं पनि महायज्ञस्वरूप भएका, (अहं क्रतुरहं यज्ञः स्वधाहमहमौषधम्, मन्त्रोऽहममेवाज्यमह-मग्निरहं हुतम्, गीतामा भगवानको उक्ति) हवनीय द्रव्य स्वरूप ॥७२॥

**स्तव्यः स्तवप्रियः स्तोत्रं स्तुतिःस्तोता रणप्रियः ।**
**पूर्णः पूरयिता पुण्यः पुण्यकीर्तिरनामयः ॥७३॥**

प्राणीमात्रले सदा स्तुति गरिने, स्वयं स्तोत्रस्वरूप भएकाले स्तुति पनि साह्रै नै मन पराउने, (वन्दे महापुरुष ते चरणारविन्दम्, भज गोविन्दं भज गोविन्दं, श्रीकृष्णः शरणं मम, त्वमेव माता च पिता त्वमेव, हरेराम हरेराम---हरेकृष्ण हरेकृष्ण आदि पनि स्तुति गरिरहने, (सर्वब्रह्मात्म चैतन्य गोलोकी जगदीश्वर, लाई भज्छन् नित्यजसो ब्रह्मा विष्णु तथा शिव) युद्धलाई मन पराउने, सम्पूर्ण परिपूर्ण स्वरूप भएका (पूर्णमदः पूर्णमिदं पूर्णात् पूर्णमुदच्यते, पूर्णस्य पूर्णमादाय पूर्णमेवावशिष्यते) आफ्ना भक्त र उपासकको सम्पूर्ण मनोकामना पूर्ण गर्ने, (सर्वं पूरयते हरिः) पाप र अधर्मले कहिल्यै न छुने पुण्यकीर्ति भएका, (हरि छन् प्यारा सबका सहारा पुण्यश्रवण कीर्तन,) आधी व्याधि उपाधि आदि त्रिताप तथा शारीरिक मानसिक रोगबाट मुक्त भएका ।।७३।।

**मनोजवस्तीर्थकरो वसुरेता वसुप्रदः ।**
**वसुप्रदो वासुदेवो वसुर्वसुमना हविः ॥७४॥**

मन समान वेग भएका, (मनोगति शीघ्रगामी हुन्छ पुग्ने छिटो अति) आफ्नो वासस्थानलाई पावन तीर्थ बनाउने, (हरिहरक्षेत्र वराह क्षेत्र मुक्तिक्षेत्र रूरूक्षेत्र, यस्ता पुण्यक्षेत्र अनेकौं छन् यहीं पावन तीर्थ) सुवर्ण बीज भएका (उत्तम पावन रोगविनाशी धातु हुन्छ सुवर्ण, त्यस्ता प्रभुको दर्शन पाए जीवन बन्छ सधन्य) आफ्ना भक्त र सेवकलाई समृद्धि र ज्ञानको अपार धन दिने, वसुनामक दैत्यको नाश गर्ने,

वसुदेवका पुत्र भएर अवतार लिई लीलाविलास गर्ने प्राणीमात्रको घट घटमा व्याप्त भएर, महायज्ञमा प्रदान गर्ने, ज्ञान समृद्धि ऐश्वर्यमय मन भएका, महायज्ञमा हवन गरिने हवनद्रव्य (घिउ चरू पायस) समान, (त्वदीयं वस्तु गोविन्द तुभ्यमेव समर्पये, होला मेरो कर्म पूर्ण कृपा तिम्रो सदा रहे) यस प्रकार सबैकर्म प्रभुमा अर्पनु पर्दछ ।।७४।।

**सद्गतिः सत्कृतिः सत्ता सद्भूतिः सत्परायणः ।**
**शूरशेनो यदुश्रेष्ठः सन्निवासः सुयामुनः ।।७५।।**

सदा परब्रह्मको चिन्तन गरी ब्रह्मवादीहरूको लागि उत्तम गति स्वरूप भएका, (मनसा कर्मणा वाचा गर्दा नै प्रभुचिन्तन, पाइन्छ पुग्न प्रभुको धाममा भै अकिञ्चन) प्रभुको सकल कर्म उत्तम खालका हुन्छन्, एउटै अस्तित्व (सत्ता) र वर्चस्व कायम गर्ने भएका, (एकोऽहं बहु श्यामः) (घटाकाश मठाकाश शून्याकाशं पृथक्सम, देखिएपनि एकै हुन् छैन तिन्को विभाजन) सदा सर्वदा सर्वथा सत्यपरायण रहने, शूरसेन वंश संग सम्बन्धित, यदुहरूमा श्रेष्ठ, (यदुकै कुलमा जन्म लिएर भएर गोकुलग्वाला, भ्रममा पारे, मारे कंस दुइ कुलका रखवाला) सत्पुरुष (योगी ध्यानी मुनिजन) का परमाराध्य स्थान (केन्द्र) भएका, यमुनामा प्रविष्ट कालीय नागको मर्दन (कालीयमर्दन) गरी यमुनालाई विषशून्य बनाई क्रीडा गर्ने ।।७५।।

**भूतावासो वासुदेवः सर्वासुनिलयोऽनलः ।**
**दर्पहा दर्पदो दृप्तो दुर्धरोऽथापराजितः ।।७६।।**

सम्पूर्ण प्राणीहरूको अन्तरात्मामा निवास गर्ने, आफ्नो मायाले संसारलाई नचाउने, (मनु, अक्रूर र मार्कण्डेय कुब्जा नन्द सुदामा,

सवकन मायाजाल रचेर पार्नुभयो दुविधामा) प्रलय कालमा सबै प्राणीलाई आफूभित्र लीन गराउने, प्रलयकालको अग्निसमान अनन्त शक्ति भएका, दुष्टहरूको घमण्डलाई नाश गर्ने, धर्मभीरूहरूलाई चैतन्यमय दर्प दिने (प्रभुप्रेममा लीन भएकी मीराले विषप्याला, गर्दा पान भयो त्यो अमृत यही हो दर्प निराला) अनन्त आत्मतत्त्वको आभासमा रमीरहने, सजिलै संग भेट्टाउन न सकिने, (ब्रह्मज्ञानी हूँ भन्थे उद्धव बस्थे कृष्ण कैसंग, गोकुल जाँदा गोपीजनको देखे प्रेमप्रसंग, अज्ञानी ती गोपनारीको कृष्णप्रतिको प्रेम, देख्दा उनको भ्रम भो दूर बुझे तत्त्व छर्लङ्ग) राग द्वेष काम क्रोधादि आन्तरिक शत्रु र दुष्टप्रवृत्तिका वाह्य दानवले कहिल्यै जित्न न सक्ने ।।७६।।

**विश्वमूर्तिमहामूर्तिर्दीप्तमूर्त्तिरमूर्तिमान् ।**
**अनेकमूर्तिरव्यक्तः शतमूर्तिः सताननः ।।७७।।**

सम्पूर्ण चराचर ब्रह्माण्ड नै मूर्ति (आकृति) भएका, (विश्व नै हरिको रूप हरि हुन् विश्वरूप ती, यस्तो विचारी हेरेमा देखिन्छन् ती जताततै) महान् मूर्ति भएका, (निराकार र साकार सूक्ष्म स्थूल दुवैथरी, धर्दछन् रूप स्वेच्छाले सबका गति श्रीहरि) ज्ञानको प्रकाशमय मूर्ति भएका (ज्योतिको पुञ्जको रूपमहाँ पनि ती देखिई, भक्तलाई ज्ञान दिन्छन् भक्तिले दृढ बाँधिई) कतै कतै मूर्तिरहित भएर पनि शब्दरूपमा (शब्द ब्रह्मभै) भक्तहरूको कार्य पूर्ण गर्दछन्, (ॐ इत्येकाक्षरं ब्रह्म व्याहरन् मामनुस्मरन् यः प्रयाति त्यजन् देहं स याति परमां गतिम्।।– गीता) अनेक मूर्ति पनि यदा धारण गर्दछन्, (उद्धवार्जुनको इच्छा पूर्ण गर्न मुरारिले, दिए दर्शन प्रत्यक्ष श्रीहरि विश्वरूपले) कहिले

काहीं भक्तको परीक्षागर्न अव्यक्त (छलीको रूप लिएर) भै पनि प्रकट हुन्छन्, (सदा चनाखो हुनुपर्नेछ गर्दा भक्ति महान्, कुन वेला कुन रूपमा भेटिन्छन् भगवान्) कहिले काहिं सयौ मूर्ति लिएर पनि प्रकट भएर भक्तको मन भ्रमित पारिदिन्छन् ।।७७।।

**ऐको नैकः सवः कः किं यत्तत्पदमनुत्तमम् ।**
**लोकबन्धुर्लोकनाथो माधवो भक्तवत्सलः ।।७८।।**

(कहिले एक र कहिले अनेक कहिले को किन कसो गरी भन्ने नाना भ्रममा पार्छन् भक्तहरूकन वेशरी । लोकबन्धु औ लोकनाथ छन् लक्ष्मीका पति माधव, भक्तहरूमा प्रभाव पार्न रच्छन् मायाको भव ।। परमभक्तिको लिई विश्वास भक्तवत्सललाई बुझौं नेत्र चिम्लिई ध्यानयोगले प्यारा श्रीहरिलाई चिनौं) ।।७८।।

**सुवर्णवर्णो हेमाङ्गो वराङ्गश्चन्दनाङ्गदी ।**
**वीरहा विषमः शून्यो घृताशीरचलश्चलः ।।७९।।**

सुवर्णजस्तो वर्ण (अनुहार) भएका, कसीमा खारिएको सुनझैं अंग भएका, श्रेष्ठ (लोक प्रसंशित) देह भएका, श्रीखण्ड जस्तै सुशोभित बाजुवन्द पहिरेका, वीर वीर दैत्यहरूको संहार गर्ने, उनको रूप गुण र शौर्यको कसै संग पनि तुलना गर्न न मिल्ने, त्रिगुण पञ्चतत्त्व र तन्मात्र भन्दा पर भएका, कुनैपनि आशा न राख्ने, (दिने सबकन धेरै अभीष्ट मनका अभिलाषा, राख्ने भक्तहरूबाट केवल शाश्वत भक्तिको आशा) (पत्रं पुष्पं फलं तोयं यो मे भक्त्या प्रयच्छति, तदहं भक्त्युपहृत-मश्नामि प्रयतात्मनः) माथि वर्णित रूप गुण सामर्थ्य दया विवेकादिमा स्थिर (अचल) भएका, वायुरूप भएर सदा वहनशील भै सर्वत्र व्याप्त भएका ।।७९।।

**अमानी मानदो मान्यो लोकस्वामी त्रिलोकधृक्।**
**सुमेधा मेधजो धन्यः सत्यमेधा धराधरः॥८०॥**

कुनै प्रकारको पनि अभिमान न गर्ने, नश्वर जीवलाई अभिमानमा भुलाइदिने, चराचर जगत द्वारा सदामान्य परब्रह्म चैतन्य स्वरूप, तीनै लोकका एकमात्र स्वामी तीनै लोक (भूर्भुवः स्वः) लाई स्वसामर्थ्यले धारण गर्ने, उत्तम बुद्धि भएका, यज्ञबाट उत्पन्न भएका स्वनामले सर्वत्र धन्य (प्रसिद्ध) भएका, सत्यब्रह्मस्वरूप भएका, (लोक छ मिथ्या प्रभुछन् सत्य अन्वेषण गरूँ नित्य त्यही, नहीं ता व्यर्थ भई गै जाला मानवजीवनको सही) पृथ्वीलाई धारण गर्ने अनन्त शेष रूप॥८०॥

**तेजोवृषो द्युतिधरः सर्वशस्त्रभृतां वरः।**
**प्रग्रहो निग्रहो व्यग्रो नैकशृंगो गदाग्रजः॥८१॥**

तेजको प्रचण्ड र उग्र रूप धारण गरी भूमण्डललाई शुष्क पारी पुन साम्वर्तक मेघस्वरूप भएर वृष्टि गर्ने, जाज्वल्यमान कान्ति धारण गर्ने, शस्त्र धारीहरूमा सर्वश्रेष्ठ, भक्तहरूद्वारा भक्तिपूर्वक समर्पित वस्तु (पत्रं पुष्पं फलं तोयं) हरूलाई सप्रेम स्वीकार गर्ने, सबैलाई (देवासुर मर्त्य आदि लाई) आफ्नो वशमा राख्ने, (हर्ता कर्ता धर्ता भर्ता दाता ग्रहीता उनै हुन्, हाम्रो केवल इच्छामात्र पूरण कर्ता उनीनै छन्) भक्तहरूको अभिलाषा पूर्ण गर्न सदा तत्पर रहने, अनेक (चार) शृंग भएका, गदका जेठादाजु (श्रीहरि) ॥८१॥

**चतुर्मूर्तिश्चतुर्बाहुश्चतुर्व्यूहश्चतुर्गतिः।**
**चतुरात्मा चतुर्भावश्चतुर्वेद विदेकपात्॥८२॥**

विराट् विश्वरूप, अनन्तहिरण्यगर्भरूप, उध्वाऽध व्याप्त शंकररूप तथा सर्वात्मतत्त्वरूप चार मूर्तिस्वरूप भएका, शंखचक्र (सुदर्शन) गदा पद्मले सुशोभित चार बाहु भएका, सगुण शरीरधारी पुरुष, वेदपुरुष, छन्दपुरुष र महापुरुष यी चार व्यूह भएका, ब्रह्मचर्य गार्हस्थ वानप्रस्थ र संन्यासचारै आश्रमका वास्तविक ज्ञाता तथा ब्राह्मण क्षत्रिय वैश्य र शूद्र चारैवर्णका नियम कर्म र कर्तव्यको बोध भै श्रुति स्मृति पुराण निगम र आगममा प्रदर्शित विधिअनुसार स्वकर्मनिष्ठ भै धार्मिक र सामाजिक कर्म गर्नेहरूका गति भएका सत्य त्याग दया विवेकमय आत्मा भएका, धर्म अर्थ काम मोक्षादि चार प्रकारको भाव भएका, चार (ऋक् यजु साम अथर्व) वेदका आद्योपान्त ज्ञाता एक पाउ भएका, (ऊर्ध्वमूलमधः शाखमश्वत्थस्वरूप) ।।८२।।

**समावर्तोऽनिवृत्तात्मा दुर्जयो दुरतिक्रमः ।**
**दुर्लभो दुर्गमो दुर्गो दुरावासो दुरारिहा ।।८३।।**

संसारलाई कुम्हालेको चक्रकै सरी फनफनी घुमाउने, (कहिले सुख औ कहिले दुःख कहिले शान्ति र पीडा, कर्मचक्रमा घुमीरहन्छन् मानव गर्दै क्रीडा) विश्वब्रह्मण्डमा व्यापक भै सर्वत्र सबैलाई समताको बोध गराई समफल प्रदान गर्ने, (पृथक् भाव न राख्ने) कसैले पनि जित्न न सक्ने, प्रभुले निर्दिष्ट गरेको खटनलाई कसैले पनि अतिक्रम (उल्लंघन ) गर्न न सक्ने प्रभुसमक्ष पुग्न भेट्टाउन र प्रभुको अस्तित्व जान्न बुझ्न न सकिने, योगी र भक्तजनले ठूलो प्रयास गर्दा मात्र प्रभुलाई हृदयमा वास गराउन सक्ने, दुष्टमति भएका दुर्दान्त शत्रुहरूलाई विनाश गर्ने ।।८३।।

**शुभाङ्गो लोकसारङ्गः सुतन्तुस्तन्तुबर्धनः ।**
**इन्द्रकर्मा महाकर्मा कृतकर्मा कृतागमः ॥८४॥**

अतिसुन्दर दर्शनप्रिय अंग भएका, लोकलाई सुगम तरीकाले धारण गर्ने, (जसरी पंख आधार बनाई पक्षी उडदछन्, त्यसरी नै लोकलाई श्रीनारायण धर्दछन्) विश्वब्रह्माण्ड को रचनामा मूलाधार तन्तु स्वरूप भएर उक्त तन्तुलाई निरन्तरता दिइरहने, (सुन्दर शोभन दामी दामी वस्त्रहरूको तत्त्व, तन्तु भएझै श्रीहरि नै छन् विश्व चराचर सत्त्व) इन्द्र समान महापराक्रमी कर्म गर्ने, पृथ्वी आकाश वायु जल तेज आदि पञ्चतत्त्व तथा तन्मात्राका मूलाधार कर्ता भएका, गर्नु पर्ने कर्म सबै सम्पादन गरीसकेका, (उनी छन् पूर्ण उनीमै हुन्छन् पूर्णतत्त्वको वास ध्यान लगाई खोज्दा मिल्छन् उनमै सत्य आभास) श्रुति स्मृति पुराण निगम आगम आदिका निर्माता भएका, (ॐ यो एकाक्षरी ब्रह्म प्रभुको मुखनिसृत, हुँदा बने त्यसै वाट वेदशास्त्रीयसम्मत) ॥८४॥

**ऊद्भवः सुन्दरः सुन्दो रत्ननाभो सुलोचनः ।**
**अर्को वाजसनः श्रृंगी जयन्तः सर्वविज्जयी ॥८५॥**

जो स्वयं चराचर जगतको उत्पत्तिका कारणस्वरूप हुन्, अतिनै सुन्दरं छन्, (ज्ञान चक्षुले हेर्दामात्र प्रभुको मोहकरूप, हुनेछ साक्षात् हृदय पटलमा छवि त्यो स्पष्ट अनूप) अतिनै कोमल सरल र भक्तवत्सल स्वभाव भएका, (सुन्दा भक्तहरूको क्रन्दन पग्लन्छन् हरि झट्ट सारा कष्ट मिटाई दिन्छन् दौड़दै आई छट्ट) जसको नाभिभागमा देदीप्यमान रत्नहरूछन्, उनको लोचन (आँखा) मा उत्तमोत्तम ज्ञानप्रकाश झल्कन्छन्, ब्रह्मदिदेवता द्वारा सदा पूज्य, विश्वब्रह्माण्डभर

बीज अन्न र औषधीहरू प्रदान गर्ने सिंग भएका सम्पूर्ण शत्रुलाई जित्ने, सम्पूर्ण चराचर लाई आफ्नो वशमा राख्ने ।।८५।।

सुवर्णविन्दुरक्षोभ्यः सर्ववागीश्वरेश्वरः ।
महाह्रदो महागर्तो महाभूतो महानिधिः ।।८६।।

सुनको बिन्दु झैं जाज्वल्यमान, कुनै प्रकारकोपनि विकार न भएका, सरस्वती तथा वृहस्पतिका पनि अधीश्वर भएका आनन्द सुख समृद्धिरूपी अथाह सागरमा निवास गर्ने, महागर्त (गहीरो ध्यानले) मात्र भेट्टाइने, सम्पूर्ण प्राणीहरूको आधार स्वरूप भएका, संसारको अनन्त निधि समान ।।८६।।

कुमुदः कुन्दरः कुन्दः पर्जन्यः पावनोऽनिलः ।
अमृंताशोऽमृतवपुः सर्वज्ञः सर्वतोमुखः ।।८७।।

नाना प्रकारको अवतार धारण गरी भक्तहरूको संकष्ट निवारण गर्ने, धर्ममा निश्चल रहने व्यक्तिको लागि पथ प्रदर्शक बन्ने, कुन्द पुष्प झैं उज्वल अंग भएका, मेघ रूप धारण गरी प्राणीमात्रको धान्यादि समृद्धिको लागि यथेष्ट वर्षा गर्ने, परमपवित्रस्वरूप, (जसको नामको मात्र जप गर्दा निरन्तर, छुट्छन् सारा पापहरू जपौं त्यो दुई अक्षर) जसका प्रेरक कोही छैनन्, (स्वयं नै छन् पूर्ण उनी सर्वज्ञ र सनातन) अमृतकाखानी भएका, अमृत स्वरूप शरीर भएका, सवै कुरा जान्ने, (सबका मनका भाव जान्दछन् सर्वथा हरि, उनलाई खुशीराख्न जपौ है नाममाधुरी) सवैतिर मुख भएका ।।८७।।

सुलभः सुव्रतः सिद्धः शत्रुजिच्छत्रुतापनः ।
न्यग्रोधोदुम्बरोऽश्वत्थश्चापूरान्ध्रनिषूदनः ।।८८।।

योगीध्यानी र प्रेमी भक्तहरूले सजिलैसंग भेट्टाउन सक्ने सर्वोत्तम नियम र व्रत भएका, स्वयं नै सिद्ध भएका, शत्रुहरूको नाश गर्ने शत्रु हरूलाई पीडा तुल्याउने, प्रलयकालमा सबै प्राणीलाई आफूभित्र लीन गराउने, भक्त र योगीजनको उद्धारको लागि अवतार धारण गर्ने, अश्वत्थ (पीपल) को वृक्ष झैं सदा स्थिर र अचल रहने, चाणूर मुष्टिक शल तोषक आन्ध्र आदि दैत्यको संहार गर्ने ॥८८॥

**सहस्रार्चिः सप्तजिह्वः सप्तैधाः सप्तवाहनः ।**
**अमूर्तिरनघोऽचिन्त्यो भयकृद भयनाशनः ॥८९॥**

हजार किरण भएका, सातवटा जिभ्रो भएका, सातवटा समिधा स्वरूप भएका, सातवटा वाहन भएका, निराकार स्वरूप, दुःख पीडा व्यथा पापादिले न छुने, अचिन्त्य (कल्पनातीत) भएका, दुष्ट दानवादिलाई सदा भय गराउने र भक्तहरूको भयलाई नाश गर्ने ॥८९॥

**अणुर्वृहत्कृशः स्थूलो गुणभृन्निर्गुणो महान् ।**
**अधृतः स्वधृतः स्वास्यः प्राग्वंशो वंशवर्धनः ॥९०॥**

कहिले अतिनै सूक्ष्म कहिले पहाड समान अग्लो कहिले अतिनै पातलो र कहिले अतिनै ठूलो रूप धारण गर्न सक्ने, कहिले निर्गुण निराकार र कहिले सगुण साकार रूप धारण गर्ने, विश्वरचनाको प्रथम र मूल आधार महत्तत्त्वस्वरूप अरू कसैलेपनिधारण (बोक्न) न सकिने, स्वयंले नै स्वयंलाई धारण गरेका, आफू जस्ता छन् त्यस्तै आकृति भएका, (शान्त सुन्दर औ सौम्य नेत्रप्रिय स्वरूपले, भक्तको हृत्कमलमा गर्दछन् वास श्रीहरि) सर्वप्रथम र पुरातन वंश स्वरूप भएका, वंशकोवृद्धि गर्ने ॥९०॥

**भारकृत्कथितो योगी योगीशः सर्वकामदः।**
**आश्रमः श्रमणः क्षामः सुपर्णो वायुवाहनः ॥९१॥**

अनेक प्रकारको अवतारमा प्रकट भै तत्सम्बन्धी भारहरू स्वयं धारण गर्ने चारै वेदले बखान गरिएका प्रख्यात पुरुषोत्तम, ध्यान चिन्तन मननादि परम उपासनाले मात्र पाउन (भेट्टाउन) सकिने योग का स्वामी युगादि परमपुरूष, भक्तजनको सकल मनोकामना पूर्ण गरिदिने, समस्त चराचर ब्रह्माण्डनै आश्रम (गृह) स्वरूप बनाउने, दुष्टजनलाई पीडा पुऱ्याउने, सम्पूर्ण प्राणीलाई आफूभित्र लीन गराउन समर्थ भएका, (प्रलयकालमा विश्व चराचर प्रभुकै उदरमहाँ, पुग्छन् लीन हुनाकन यहीनै प्रभुक हो रटना) चार वेदरूपी पंख भएका गरूडस्वरूप, वायु वाहन भएका अनन्तपथयात्री स्वरूप ॥९१॥

**धनुर्धरो धनुर्वेदो दण्डो दमयिता दमः।**
**अपराजितः सर्वसहो नियन्ता नियमो यमः ॥९२॥**

शार्ङ्ग नामक धनुष धारण गरी दुष्ट राक्षसहरूको संहार गर्ने, धनुर्वेदका प्रकाण्ड विद्वान्, यम रूप धारण गरी प्राणी मात्रलाई तिनको कर्मानुसार दण्ड दिने, पापादिको दमन गर्ने, राजारूपले प्रजालाई राम्ररी शासन गर्ने, शत्रुहरूले कहिल्यै जित्न न सक्ने शक्ति भएका, सकलसामर्थ्यसम्पन्न, सबैलाई नियन्त्रण नर्गो, नियमको पालना गर्ने, स्वयं यमस्वरूप भएकाले मृत्यु देखि पर भएका ॥९२॥

**सत्ववान् सात्विकः सत्यः सत्यधर्मपरायणः।**
**अभिप्रायः प्रियार्होऽर्हः प्रियकृत् प्रीतिवर्धनः ॥९३॥**

सम्पूर्ण सामर्थ्यले युक्त भएका, त्रिगुणमध्ये श्रेष्ठ सत्वगुणसम्पन्न भएका, सर्वदा सत्यमा अडिग रहने, चारवेदमा वर्णित सत्यसनातन धर्ममा परायण भएका, आफ्ना प्रेमी भक्तहरूको मनको अभिप्राय बुझने, प्रेम र भक्ति गर्न योग्य भएका, सवका मन परेका, आफ्ना भक्तहरूलाई धेरै माया गर्ने, सत्य तथा निश्छल भक्ति प्रति सदा प्रेम बढ़ाउने ।।९३।।

**विहायसगतिर्ज्योतिः सुरूचिर्हुतभुग्विभुः ।**
**रविर्विरोचनः सूर्य सविता रविलोचनः ।।९४।।**

आकाशको मार्ग द्वारा हिंडने, परमोज्वल त्योतिस्वरूप, उत्तम रूचि (भक्तहरू प्रदत्त पत्र पुष्प फल तोय आदिमा) भएका, योगी मुनि र होताहरू द्वारा हवन गरि प्रदान गरेको वस्तु (हवि) भक्षण गर्ने, सवैतिर व्यापक भएका, सूर्यसमान तेजस्वी नाना प्रकारको रूप धारण गरी प्रकाशित हुने, सम्पूर्ण वस्तुहरू उत्पत्ति गर्ने, जगत् को उत्पत्ति गर्ने, (निर्दिष्ट भै उनै द्वारा गर्छन् सृष्टि प्रजापति) सूर्यसमान तेजस्वी नेत्र भएका ।।९४।।

**अनन्तो हुतभुक्भोक्ता सुखदो नैकजोऽग्रजः ।**
**अनिर्विण्णः सदामर्षी लोकाधिष्ठानमद्भुतः ।।९५।।**

आदि अन्तरहित नित्यरूप, हवन गरिएको वस्तु उपभोग गर्ने, सवै सांसारिक वस्तु भोग गर्ने, (बनी प्रकाश शोस्छन् ती हावा बनी सुकाउँछन् वर्षेर पानी भै फेरी सारा विश्व डुबाउँछन्) सवै लाई सुख दिने, मत्स्य कूर्म वराह नृसिंहादि अनेक रूप धारण गरी प्रकट हुने, सवै भन्दा अघी जन्मेका, (जलमय जग रहँदा तद्भव अण्ड फुटेर, श्रीहरि प्रकट हुनूभो अग्रज देव भएर) कहिल्यै पनि दुःखी न भै प्रसन्न

रहने, सदा सहनशील रहने, सम्पूर्ण लोकका अधिष्ठाता, (उनी नै रच्छन् उनीनै भर्छन, गर्छन उनी संहार, यसै गरी नै चलीरहन्छ विशाल यो संसार) अद्भूत शक्तिले सम्पन्न भएका ।।९५।।

**सनात्सनातनतमः कपिलः कपिरव्ययः ।**
**स्वस्तिदः स्वस्तिकृत् स्वस्तिः स्वस्तिभुक्स्वस्तिदक्षिणः ।।९६।।**

विश्वको कालरूप भएका (कालोऽस्मि लोकक्षयकृत् प्रबृद्ध-गीता–११,३२) परम्परा देखि चली आए को सनातनस्वरूप भएका, सामुद्रिक अग्नि बडवानल स्वरूप, कपिल वर्ण भएका, वराह स्वरूप, कहिल्यै नाश न हुने, सबैको कल्याणको कामना गर्ने, सबैलाई शान्ति र कल्याण दिने, स्वयं नै कल्याणस्वरूप भएका, कल्याणमय तत्त्व भोग गर्ने, (कल्याणकामना राखी प्राणीसेवा गरौं सदा, सन्तुष्ट हुन्छन् यसमै श्रीनारायण सर्वदा) कल्याणकारी कर्म नै दक्षिणा-स्वरूप भएका, (हरिलाई खुशीपार्न चलौ कल्याणमार्गमा, परोपकार औ सेवा श्रेष्ठ मानिन्छ कर्ममा) यस मार्गमा चल्ने व्यक्ति लाई हरि साथ दिन्छन् ।।९६।।

**अरौद्रः कुण्डली चक्री विक्रम्यूर्जितशासनः ।**
**शब्दातिगः शब्दसहः शिशिरः शर्वरीकरः ।।९७।।**

डरलाग्दो स्वभाव न भएका, (शान्त प्रकृतिका) (शान्ताकारं भुजगशयनम्) चौशट्ठी व्यूहयुक्त सूर्यमण्डल रूप, सुदर्शन चक्र बाहुमा धारण गर्ने, विलक्षण (वर्णनातीत) पराक्रम भएका, सर्वव्यापक र विशाल शासन भएका, वाणीले (स्तुतिशब्दलेमात्र) भेट्टाउन न शकिने (भक्ति र हार्दिक प्रेमले मात्र पाइने) (हे कृष्ण! हृदयावासी झट्टै आई

